www.nepalgunjnews.com

# ३ सम्यक यात्रा

दैनिक नेपालगन्ज विशेषाङ्क-२०७०







नेपाल-भारत प्रवेशद्वार



बौद्ध गुम्बा



नमाज अदा गरिँदै

राष्ट्रिय दैनिक पत्रिका

दैनिक नेपालगन्ज




## यसभित्र



**दैनिक नेपालगन्ज** राष्ट्रिय दैनिक पत्रिका **विशेष अङ्क**

प्रधान सम्पादक : झलक गैरे

सम्पादक : भूमि भण्डारी

प्रबन्ध निर्देशक :अच्यूतराज सुवेदी

स्तम्भकार : लोकबहादुर शाह
बसन्त गौतम

संवाददाता : दुर्गा रोकाय
विनय दिक्षित
देवेन्द्रराज पौडेल
हरि ज्ञवाली

जिल्ला प्रतिनिधि : नरेन्द्र सिंह
पवन जायसवाल
भावुक योगी
सन्दीप वैश्य, बर्दिया
दशरथ घिमिरे, दाङ

तस्वीर : रुपक श्रेष्ठ

व्यवस्थापन
लेखा प्रशासन : सुनिता चौधरी
सम्बन्ध प्रबन्धक : लोकनाथ शर्मा
विशाल सोनी (बजार)
वितरण व्यवस्थापक :रमेश चौधरी
लेआउट :बिहानी प्रिटिंग सेवा
मुद्रक :
सफल इन्टरनेशनल मल्टी सर्भिस प्रा.लि
काठमाण्डौं, नेपाल


सम्पर्क
सम्यक मिडिया
दैनिक नेपालगन्ज
सुर्खेतरोड, नेपालगन्ज
फोन : ०८१५२६५११, ९८०२५२०७११
इमेल : **dailynepalgunj@gmail.com**
**Web : www.nepalgunjnews.com**


# सम्यक यात्राको उकालो

*मध्य तथा सुदूर पश्चिमाञ्चलको व्यापारिक केन्द्रका रुपमा रहेको नेपालगन्जमा १६ वर्षअघि सुरु भएर त्यसलाईजिवन्तता दिन हामी युवा पत्रकार सम्मिलित सम्यक मिडियाले नयाँ व्यवस्थापनसहितको प्रकाशनलाई सफलतापूर्वक दुइ वर्षआज पूरा भयो। तेस्रो वर्ष प्रवेशलाई केही नयाँ कलेबर दिन आज यो 'सम्यक यात्रा' प्रारम्भ गरेका हौं, यो वास्तवमा नेपालगन्जको पत्रकारितामा यो अर्को नयाँ अभ्यास हो, जसरी दैनिक नेपालगन्जलाई १६ वर्ष अघि तत्कालिन रुपमा नवित्तम प्रयासका रुपमा थालिएको थियो।*

*तपाइको साथ विना दैनिक नेपालगन्जको सम्यक यात्रा सम्भव थिएन । यसका लागि सम्पादकीय/व्यवस्थापकीय टिम, विज्ञापनदाता, लेखक, पत्रकार, आमपाठक सबैलाई यतिबेला नमनसहित हार्दिक आभार व्यक्त गर्नचाहन्छौं । र, आउँदा दिन नेपाली राजनीतिले दुर्घटना आमन्त्रण गरेन भने नेपालगन्जका लागि साच्चिकै सुखद र समृद्ध छ । विकास निर्माणका पछिल्ला सुरुवातले पनि त्यसलाई दिशा निर्दिष्ट गरिरहेको छ । हाम्रो प्रयास नेपालगन्जबाट पत्रकारितामा व्यवसायिक धारबाट अगाडी बढ्नेनै हो । सम्यकको संयोजन गर्दाको दुइ वर्षमा यहाँका दैनिक पत्रिकाहरुको सूचिमा दैनिक नेपालगन्ज नेतृत्वमा छ । हामीलाईयो अवस्थामा टिकाइ राख्नको चुनौती तपाइले थपिदिनुभएको छ । हाम्रो केन्द्र त्यसैमा रहन्छ, छिटो, सही तथ्य समाचार पस्कन्छौं।*

*नेपालगन्जलाई मध्यपश्चिम हुँदै देश र विदेशमा पुऱ्याउने, विश्वलाईनेपालगन्जसँग परिचित गराउने अर्को प्रयास हामी समाचारमूलक वेभ साइटमा लागेका छौं । जसले तपाइलाई पलपलका खबरसँग तपाइलाई सुसूचित गराउनेछ। यो तपाइलाई निरन्तर सुसूचित गराउने हाम्रो पूर्वप्रतिबद्धताको कार्यान्वयन मात्र हो। तपाइको साथले हामी अगाडीका दिनमा अझ नजिक हुदैछौं। वास्तवमा अत्याधुनिक प्रविधिका दृष्टिले अझै नेपालगन्ज प्रगतिलाई पछ्याउन सकेको छैन। नेपालगन्जबाट हरेकका हातमा समाचार पुऱ्याउन दैनिक नेपालगन्जको प्रयासलाई टेवा दिन हामी 'नेपालगन्जन्यूज डट कम' सुरु गर्दैछौं। 'सम्यक यात्रा' पनि एउटा अर्को समाचारमूलक अभ्यासको द्योतक हो । पछिल्ला दुइ वर्ष दैनिक नेपालगन्जले गरेका प्रयास तपाई सुधि पाठकसँग अवगतनै छ। गतिलो इतिहासलाई वर्तमानसँग जोडेर साँच्चिकैपत्रकारिताको मूल मर्मलाई बोकेर हिड्ने हाम्रो प्रयास सफल छ भन्ने हामीलाई विश्वास पनि छ।*

*विगतलाई आभारीपूर्ण सलाम गर्दै त्यसप्रति सम्मानपूर्ण विदाई र आगतको स्वागतका लागि विनम्रतापूर्वक साथ, सहयोग, सहकार्यको अपिल छ।*

सञ्चार विशेष

# मिडियामा सम्भावना छ, लगानी छैन



- कृष्ण अधिकारी

नेपालगन्जका सन्चारकर्मीहरुबिच हुने औपचारिक/अनौपचारिक छलफलमा बारम्बार उठ्ने बिषय हो, 'पत्रिका चलाउनै गाह्रो भयो । बिज्ञापन पनि छैन । बिज्ञापन आयो भने पनि निक्कै सस्तोमा छाप्नु पर्छ । ग्राहकबाट पत्रिकाको पैसा पनि राम्रोसंग उठ्दैन । पत्रिको अबस्था नाजुक भए पनि सरकारले सहयोग गर्नुको सट्टा पत्रिकालाई भ्याटमा दर्ता गर, कर तिर भनिरहेको छ। यसको हामीले बिरोध गरिरहेका छौ । तपाइहरुले पनि साथ दिनु पर्‍यो ।'

तर यस्तो अबस्थामा पनि नेपालगन्जमा नयाँ पत्रिका दर्ता हुने क्रम रोकिएको छैन । नेपालगन्जबाटै एक दर्जन भन्दा बढी दैनिक पत्रिका प्रकाशित भई रहेका छन् । बरु, कागज र छपाईको पैसा तिर्न नसकेका कारण अपसेट प्रेस संचालक तथा कागजका बिक्रेताको कालो सूचिमा परेका पत्रिकाहरु पनि नेपालगन्जमा छन् । समयमै पैसा नतिरेका कारण टेलिफोन र इन्टरनेटको सुबिधा काटिने समस्या त नेपालगन्जमा सामान्य जस्तै बनेको छ। अरुको पत्रिकामा काम गर्दा यी सबै समस्यालाई नजिकबाट बुझेका/भोगेका पत्रकारहरु नै पछिल्ला दिनमा आफै सम्पादक प्रकाशक भएर पत्रिका निकाल्ने क्रम ह्वातै बढेको छ ।

राम्रो ब्यबस्थापन र दक्ष जनशक्तिको ब्यबस्थापन गर्न सक्ने दैनिक पत्रिका प्रकाशन शुरु गरेको पहिलो महिनामै नाफामा पनि गएका छन् । पत्रिकाको ब्यबस्थापन तथा गुणस्तरमा ध्यान नदिने तर सधै यो भएन त्यो भएन भनेर अर्काको टिप्पणी गर्नेहरुका लागि दैनिक नेपालगन्ज राम्रो उदाहरण हो ।

दैनिक नेपालगन्ज पुनः प्रकाशन शुरु भएको १ बर्ष मै आफ्नै आम्दानीबाट खर्च धान्ने अबस्थामा पुगेको छ । भने सदभाव, कालपृष्ठ, हाम्रो समाचार दैनिकले पनि राम्रै मुनाफा कमाइ गरेका छन् । कोहलपुरमा पनि केही दैनिक पत्रिकाहरु राम्रैसँग चलेका छन् । पत्रकार महिलाहरुले आफ्नै सक्रियतामा अगुवा सञ्चार चलाएका छन् । मिसन टुडेले पनि राम्रै व्यवसायिकताको बाटो लिइरहेको छ ।

गुणस्तरिय कागज, सफा छफाई र स्थानीय समाचारलाई प्राथमिकता दिएका कारण छोटै समयमै दैनिक नेपालगन्ज पाठकहरुमा लोकप्रिय मात्रै बनेको छैन राम्रो मुनाफा कमाउन अबस्थामा पुगेको छ ।

दैनिक नेपालगन्जको पछिल्लो अबस्थालाई हेर्दा नेपालगन्जमा राम्रो र




गुणस्तरिय पत्रिकाका लागि अझै पनि ठूलो बजार र सम्भावना छ भन्ने देखिन्छ । तर नेपालगन्जमा अझै पनि पत्रिकामा ठूलो लगानी र व्यवसायिक घराना भने अझै आकर्षित हुन सकेको छैन ।

ठुलो लगानी, ब्यवसायिक दक्षता नभएका कारण नेपालगन्जका अधिकाँश दैनिक पत्रिकामा न्युनतम आधारभूत साधन स्रोतसम्म छैन । कम्प्युटर, इन्टरनेट, बत्तिको ब्याकअप, सम्पादकीय टिमका लागि एउटा कोठा सम्मको ब्यवस्था छैन ।

पत्रिकाको ब्यबस्थापन तथा सम्पादकीय टिममा काम गर्नेहरुलाई अहिलेको महँगीमा सहज रुपमा गुजारा चलाउन पुग्ने पारिश्रमिक सम्म दिन नखोज्ने, पत्रिकाका लागि आवश्यक पर्ने न्युनतम साधन स्रोत

पत्रिकाको ब्यबस्थापन तथा सम्पादकीय टिममा काम गर्नेहरुलाई अहिलेको महँगीमा सहज रुपमा गुजारा चलाउन पुग्ने पारिश्रमिक सम्म दिन नखोज्ने, पत्रिकाका लागि आवश्यक पर्ने न्युनतम साधन स्रोत र जनशक्तिको ब्यबस्था नगरी नदिई राम्रो र ब्यबसायिक रुपमा पत्रिका चलाउछु र एक साथ नाम र दाम कमाउछु भन्ने प्रबृत्ति नै नेपालगन्जको ब्यबसायिक पत्रिकारिताको बिकासमा मुख्य बाधकको रुपमा देखिएको छ ।

र जनशक्तिको ब्यबस्था नगरी नदिई राम्रो र व्यबसायिक रुपमा पत्रिका चलाउँछु र एक साथ नाम र दाम कमाउछु भन्ने प्रबृत्ति नै नेपालगन्जको व्यबसायिक पत्रिकारिताको बिकासमा मुख्य बाधकको रुपमा देखिएको छ ।

अबस्था कस्तोसम्म छ भने न्युनतम पारिश्रमिक निर्धारण समितिले तोकेको पारिश्रमिक दिंदा पनि नेपालगन्जका केहि पत्रिकाले दक्ष पत्रकार पाउन सकेका छैनन। दैनिक नेपालगन्जमा पटक पटक प्रकाशित आवश्यकताको सूचनाले पनि त्यसलाई पुष्टि गरेको छ ।

नेपालगन्जमा दक्ष र तालिम प्राप्त पत्रकारको कमी भने छैन तर उनीहरु नेपालगन्जका स्थानिय पत्रिकामा काम गर्न रुचाउँदैनन । नरुचाउनुका मुख्य कारण पारिश्रमिक नै हो। साधन स्रोत र पर्याप्त जनशक्ति नभएको पत्रिकामा काम गर्नु भनेको नदुखेको टाउको दुखाउनु जस्तै हो । रात भर बिद्युत भएन भने नेपालगन्जबाट बाट प्रकाशित हुने कुनै पनि पत्रिका भोलि पल्ट प्रकाशन हुँदैनन। रातीमा बिद्युत नभएको दिनमा नेपालगन्जका पाठकले स्थानिय पत्रिकाहरु पढ्न नपाउने समस्या बर्षौ देखि कायमै छ । दुई दिन को पत्रिका एकै साथ पाठकको घरमा पुग्नु भएको नेपालगन्जका लागि सामान्य जस्तै भई सकेको छ ।

साधन स्रोत तथा दक्ष जनशक्तिको ब्यबस्थापन नगरी पत्रिका निकाल्ने होडबाजीका कारण पत्रकारिताको 'क्वान्टिटि' बढे पनि 'क्वालिटी' भने बढ्न सकेको छैन ।

अझै पनि नेपालगन्जका अधिकाश दैनिक पत्रिकाको सम्पादकीय टिममा तीन जना भन्दा बढी जनशक्ति छैन । जसका कारण पत्रिकाले नयाँ र खोजमुलक समाचार दिन सकेका छैनन्। कसले के भन्यो र कहाँ के भयो भन्ने समाचार र एफएम रेडियो र अनलाइनमा छापिएका समाचारलाई कपि पेष्ट गरेर नेपालगन्जका धेरैजसो पत्रिकाका पाना भरिने गरेको छ ।

सम्पादकीय पेजमा प्राय सबै पत्रिकाले लेख छाप्ने गरेका छन्, तर, अधिकाँश पत्रिकामा छापिएका लेखहरु मध्ये ८० प्रतिशत भन्दा बढी लेख साभार गरिन्छ। हप्तामा तीन देखि चार वटा लेख अन्य समाचार माध्यमबाट साभार गरेर नछाप्ने पत्रिका बिरलै छन् । नेपालगन्जका अधिकाँश समाचार माध्यमले लेखकका लागि पारिश्रमिक दिंदैनन् । पारिश्रमिक नदिने भएका कारण नेपालगन्जका पत्रिकाले बिषय बस्तुमा केन्द्रित तथा समसामयिक लेखहरु पाउनै सकिरहेका छैनन्। आफ्नै पत्रिकाका लागि लेख लेख्ने लेखकहरुको समूह बनाउने तर्फ पनि पत्रिकाका सम्पादकहरुले प्रयास गरेका छैनन्। अपवादकै रुपमै मान्नुपर्छ दैनिक नेपालगन्जमा स्थानीय लेखकहरुका नियमित स्तम्भकारहरुको लेख पढ्न पाइन्छ।

नेपालगन्जका पत्रिकामा समाचारसँगै फोटो छाप्ने क्रम भने पछिल्ला दिनमा बढ्दै गएको छ। बिशेष घटनाक्रममा फोटो फिचर छाप्ने गरिए पनि कार्टुन छाप्ने क्रम भने अझै शुरु भएको छैन । कार्टुन पत्रिकाका पाठकको रोजाईमा पर्ने समाचार सामाग्री भए पनि त्यस तर्फ पत्रिकाका सम्पादक प्रकाशकहरुको चासो गएको छैन। कार्टुन बनाउने जनशक्ति नभएका कारण चाहँदा चाहँदै पनि कार्टुन छाप्न नसकिएको भनाइ सम्पादकहरुको छ।

पाँच बर्ष पहिले सम्म नेपालगन्जका पाठकहरुको हातमा कान्तिपुर दैनिक भन्दा पहिले लखनउबाट प्रकाशित हुने भारतीय दैनिक हिन्दुस्तान पर्थ्यो । जसका कारण नेपालगन्जका पाठकले काठमान्डौको भन्दा पहिले लखनउको खबर थाहा पाउथे ।

तर कान्तिपुर र केहि समय पछि नागरिक दैनिकले नेपालगन्जबाट पत्रिका प्रकाशन शुरु गरे पछि नेपालगन्जका पाठकको हातमा हिन्दुस्तान, जागरण र अमर उज्याला जस्ता हिन्दी पत्रिका भन्दा पहिले नेपाली पत्रिका पुग्न थालेको छ । जसका कारण पछिल्ला दिनमा भारतबाट प्रकाशित हुने हिन्दी पत्रिका भन्दा नेपाली पत्रिकाको प्रभाब र बजार दुबै बिस्तार हुदै गएको छ।

नेपालगन्जमा भारतबाट प्रकाशित हुने हिन्दी पत्रिका बिकी गर्दै आएका बिकेताका अनुसार, नेपालगन्जमा हिन्दी पत्रिकाको बजार बर्षेनी खुम्चिँदै गएको छ । नेपालगन्जको त्रिभुवन चौकमा रहेका हिन्दी पत्रिकाका दुई वटै पसल बन्द भएका छन्।

*(डेढ दशकदेखि नेपालगन्जमा सक्रिय पत्रकार अधिकारी हाल नेपाल टेलिभिजनसँग आबद्ध छन् ।)*

# कस्का लागि पत्रकारिता ?



●भूमि भण्डारी

*पुषमा नेपालगन्जमा दङ्गा भयो । मानिसहरुका पसल जलाइए । सम्पति नष्ट गरिए । भौतिक आक्रमण भयो । एक किसिमले वीपी चोक युद्ध मैदान झैं भयो । हाम्रो पत्रिका पनि असुरक्षाका कारण बन्द भयो । पाँच दिन पछिको माहौल अर्कै थियो । अघिल्लो दिन आत्मियता दर्शाउँदै अङ्गालो हाल्ने गरेका साथीहरु नै पराया लाग्न थालेका थिए । यस्तो दुर्दान्त घटनापछि पत्रिकामा काम सुरु भएको पहिलो दिन हामीले छिट्टै काम सक्ने र जाने निधो गऱ्यौं । तर पनि रातको १० त बजिहाल्यो । काम सकेर, इदगाह रोडमा हिड्दा हामीमा एक किसिमको डर थियो । एक साता अघि जतिबेला पनि निर्धक्क हिँडिने सडक अहिले बिरानो झैं लाग्थ्यो । कसैले आक्रमण गर्ने हो की, कसैले केही भन्ने हो की भन्ने डर मनमा पलाएको थियो ।*

२०६३ साल हिउँदतिरको कुरा हो । म नेपालगन्ज टाइम्स नाम गरेको दैनिकमा काम गर्थें । नेपालगन्जको इदगाह रोडमा पत्रिकाको अफिस थियो । अहिलेजस्तो प्रविधियुक्त थिएन त्यसताकाको पत्रकारिता । हातैले समाचार, बिज्ञापन, सम्पादकीय लेख्नु पऱ्यो, अनि टाइपिष्टले टाइप गरेर सेटिङ गरेपछि प्रुफ हेर्नु पऱ्यो । पत्रिका सानो आकारको भएपनि त्यो भर्न निक्कै धौ-धौ हुन्थ्यो। रातको ११ बजे काम सकिनु सामान्य मानिन्थ्यो ।

जयनारायण शाहजी त्यस पत्रिकाका सम्पादक थिए । हामी दुबै नेपालगन्जको कोरियनपुर बस्ने हुनाले फर्किदाँ सधैं सँगै हुन्थ्यौ। जाडोको समयमा हामी पैदल फर्किदा सडक सुनसान भै सक्थ्यो । जाडोले कुइँकिरहेका कुकुरहरु कहिलेकहिले हामीलाई देखेर भुक्थे । इदगाह रोडबाट कोरियनपुरसम्ममा एक मात्र पसल खुलेको हुन्थ्यो । वीपीचोकबाट सयमिटर भित्र एक भाइजानको घुम्टीमा पसल थियो । भाइजानको पसलमा एक टिभी सधैं बोलिरहेको हुन्थ्यो। त्यसमा क्रिकेट आएको दिन वरपरका केही युवा समेत झुम्मिने गर्थे । भाइजान सधैं हसिलो मुद्रामा प्रस्तुत हुन्थे । उनी हामीलाई 'पत्रकार बाबु' भनेर सम्बोधन गर्थे । उनी अलिक बोलक्कड पनि थिए । म त्यो पसलमा पान खान र चुरोट पिउन जान्थें। कहिलेकाँही जयजी पनि दोहरा पान खान्थे । हाम्रो दुइतीन मिनेटको भेटका क्रममा भाइजान समाचार सोध्न, आफ्नो बारेमा बताउन वा टोलको कुनै नयाँ कुरा सुनाउन भ्याउँथे । पछिपछि यो एक किसिमको दैनिकी झैं भएको थियो । हामी ढिलो भएर पसल बन्द भएको रात या हामी अनुपस्थित भएको रातपछिको भेटमा हामी एक अर्कालाई सोध्न भ्याउँथ्यौ, 'हिजो हाम्रो भेट किन भएन' भनेर ।

सोही बर्षको पुषमा नेपालगन्जमा दङ्गा भयो। मानिसहरुका पसल जलाइए। सम्पति नष्ट गरिए । भौतिक आक्रमण भयो । एक किसिमले वीपी चोक युद्ध मैदान झैं भयो । हाम्रो पत्रिका पनि असुरक्षाका कारण बन्द भयो ।

पाँच दिन पछिको माहोल अर्कै थियो । अघिल्लो दिन आत्मियता दर्शाउँदै अङ्गालो हाल्ने गरेका साथीहरु नै पराया लाग्न थालेका थिए । यस्तो दुर्दान्त घटनापछि पत्रिकामा काम सुरु भएको पहिलो दिन हामीले छिट्टै काम सक्ने र जाने निधो गऱ्यौं । तर पनि रातको १० त बजिहाल्यो । काम सकेर, इदगाह रोडमा हिड्दा हामीमा एक किसिमको डर थियो । एक साता अघि जतिबेला पनि निर्धक्क हिँडिने सडक अहिले बिरानो झैं लाग्थ्यो । कसैले आक्रमण गर्ने हो की, कसैले




केही भन्ने हो की भन्ने डर मनमा पलाएको थियो ।

त्यस रातपनि भाइजानको पसल खुला थियो । म भाइजानको पसल नजिक गएू । उनको हालखबर सोधें । भाइजानले म तिर पुलुक्क हेरे मात्र । एक शब्द बोलेनन् । मैले मागेको चिज दिए । म तिर हेर्दा उनको मुहारमा पहिलेजस्तो उज्यालोपन, आत्मियता झल्किरहेको थिएन । उनी मतिर संसयको दृष्टिले हेरिरहेका थिए । मैले धेरै कुरा सोधें, उनी बोल्छन् की भनेर । तर अहँ, उनी बोलेनन् । मलाई नरमाइलो लाग्यो । जयजीलाई मैले सोधें, 'भाइजान किन बोलेनन् मसँग ?' हामी केही दिन अघि जलेर खरानी भएका वीपीचोकका पसल नजिकबाट रातको चिसोमा खरानी कुल्चदै, अलिकति

डर भरिएको मन लिएर कोरियनपुरतिर लम्कियौं ।

भाइजानको पसलमा हरेक रात म गइ रहें र उनीसँग एक्लै बोलिरहें । करिब एक हप्ता पछि मात्र भाइजानको मुखबाट मेरो लागि शब्द निस्कियो । उनले अवधीमा भने, 'का कही पत्रकार बाबु, सब बरवाद कै दिइन् ।' मैले यसबारे थप जिज्ञासा राखिनँ । कुरा सबै प्रष्ट थियो, हिङ्सापछि उत्पन्न संवेग र श्रृजित धारणाका कारण उनी मसँग नबोलेका रहेछन् । मेरो मनमा प्रश्नहरु आए, 'के उनी मप्रति शंकालु भएका थिए ? उनी मलाई घृणा गर्न थालेका थिए ! उनी मसँग डराएका थिए ?' उनी र मेरो केही असमानता थिए, जात, धर्म, मातृभाषा, व्यवसाय फरक थिए । उनी र मेरो समानता थियो, हामी दुबै नेपाली थियौं । तर, एक हप्ता अघिको आत्मियता कहाँ गयो ? नेपालगन्जमा भड्कीएको हिङ्सा, जसमा हाम्रो कुनै लेनदेन थिएन तर पनि यसबाट हामी प्रभावित भएका थियौं । यति मात्र होइन, घटनापछि म भाइजानको अघि पत्रकार थिइँन । उनका अघि म एक पहाडिया हिन्दु, बाहुन थिएँ । त्यसैले, म प्रति नचाहँदा नचाहँदै भाइजानभित्र द्वेष पलाएको थियो । उक्त घटनापछि यस्तै द्वेष कति भित्र पलायो होला ।

घटनाको आठ बर्षपछि सोंच्छु, तमाम नागरिकलाई सही सूचना दिएर भ्रम चिर्न सघाउनु पर्ने हामी पत्रकार डरले आफैं पत्रिका बन्द गरेर कोठाभित्र खुम्चिएका थियौं । हिङ्सा श्रृजित यहाँ भन्दा ठूलो विडम्वना के हुन सक्छ ? पत्रकारिताका केही सैद्धान्तिक उद्देश्य हुन्छन्, जसलाई व्यवहारमा लागु गर्ने प्रयास गरिन्छ । तर, त्यसबेला यस्तो सिद्धान्तको ठीक उल्टो केही मिडियाबाटै मानिसहरुको सोचाइमा नियन्त्रण गर्ने वा मिसलिडिङ गर्ने, केही घटनाको नजरअन्दाज त केहीको बढाइचढाई गर्ने, पूर्वाग्रही भएर गलत जानकारी दिने कामहरु भए । धमिलो पानीमा माछा मार्न उद्यत केही स्वार्थी जमातका कारण केही पत्रकारहरु भ्रम चिर्नु पर्नेमा आफैं भ्रम छर्न थालेका थिए । यसले पत्रकारिता कस्का लागि भन्ने प्रश्न मात्र जन्मिएन, पत्रकार आफैं असुरक्षित समेत भए ।

यो घटना भएको आठ बर्ष भएको छ । हरेक बर्ष पुष ११ गते नेपालगन्जमा यसलाई कालो दिनका रुपमा सम्झने गरिन्छ । आठ बर्ष पछि नेपालगन्जको पत्रकारितामा धेरै परिवर्तन आएको छ, छापा विद्युतीय दुवै माध्यममा । सञ्चार गृह, सञ्चारकर्मी दुबैका हिसाबले । तर, आठ बर्ष अघि र अहिलेको पत्रकार र पाठक/श्रोताको दृष्टिकोण फराकिलो भयो कि झन खुम्चेको छ ? यो पनि मुल्याङ्कन हुनु पर्छ ।

नेपालगन्जबाट टाढा भएपनि म यहाँको पत्रकारितासँग नजिक छु । हरेक बिहान दैनिक नेपालगन्ज पढेर दिनचर्या सुरु हुन्छ । केही एफएम छन्, अनलाइन प्रशारण हुने, तिनका समाचार पनि सुन्ने गर्छु । केही पत्रिकाको मास इमेल ठेगानामा म पनि सामेल छु र उक्त पत्रिकाहरु पढ्ने अवसर प्राप्त हुन्छ । यसबाहेक बिभिन्न एनजिओ, सरकारी कार्यालय, सुरक्षा निकाय, सञ्चारकर्मीका संस्था, राजनैतिक दलले पठाउने विज्ञप्ति समाचारहरु पनि मेरो इमेलमा आउने गर्छन् । अमुक व्यक्तिको इमेल ठेगानाबाट प्राप्त फलानोले फलानोलाई गाली गर्‍यो भन्ने सूचना जस्ताको तस्तै समाचारका रुपमा छाप्ने गरेका केही अखबार वा प्रशारण गर्ने केही रेडियोको हालखबर अहिले मलाई थाहा छैन ।

पत्रिका हेर्दा अहिले मानिसहरुमा राजनैतिक पार्टी प्रवेशको होड चले झैं लाग्छ । यसबाहेक निर्वाचन हुन्छ र गर्न दिन्नौ भन्ने विवादले पनि पत्रिकामा स्थान पाएको देखिन्छ । सुरक्षा वा हतियारसँग समाचार मुख्य बन्ने वा समाचारदाता सम्पादकले मन पराएको दल वा नेताको भाषण मुख्य समाचार बन्ने गरेको पनि देखिन्छ । यसले हामी बास्तवमा कस्कालागि पत्रकारिता गर्दैछौं भन्ने प्रश्न गर्न पनि आवश्यक छ । पत्रकार स्वतन्त्र हुन सक्छ कि सक्दैन ? मेरो मनमा आइरहने प्रश्न पनि हो यो ।

दैनिक नेपालगन्ज आजबाट पुनर्प्रकाशनको तेश्रो बर्ष प्रवेश गर्दैछ । झलकदाई एक्लै हस्याङ-फस्याङ गर्दै, कहिले हतोत्साहित त कहिले उत्साहित हूँदै पत्रिका हाँकिरहेका छन् । दैनिक नेपालगन्ज टिम पनि यही समाजको हिस्सा भएकाले हामी एकदमै पृथक छौं वा चन्द्रलोकबाटै झरेका हौं भनेर म दावा गर्दिन । तर, निस्पक्षताको सवालमा हाम्रो कसैसँग सम्झौता हुँदैन, यो प्रतिवद्धता हो ।

दैनिक नेपालगन्जलाई यति विश्वासनीय बनाउन सहयोग पुऱ्याउनु हुने पाठक, विज्ञापनदाता, शुभचिन्तक र दैनिक नेपालगन्ज टोली अवश्य बधाईका भागिदार छन् । पुनर्प्रकाशनको तेश्रो बर्ष प्रवेशका अवसरमा सबैलाई हार्दिक शुभकामना ।

# फरक पत्रिका, अव्वल पत्रकारिता



● सिर्जना आचार्य

*दशवर्ष बढी चलेको सशस्त्र द्वन्द्वको सबैभन्दा बढी मार महिलामा परेको छ । त्यसैले मुलुकको शान्ति निर्माण प्रकृयामा पनि महिलाको भूमिका उत्तिकै छ । महिलाका भोगाई, उनीहरुको अनुभव, महिलाका माग आदि विषयलाई उठाउन पुरुषका भन्दा महिला बढि सक्षम हुन्छन् । जबसम्म महिला पत्रकारहरु व्यवसायिक रुपमा पत्रकारितामा आउदैनन्, ५१ प्रतिशत रहेको भनिएका महिलाका सवालहरु बाहिर आउन सक्दैनन् । त्यसैले महिला पत्रकारलाई अवसर दिने र गुणस्तर वृद्धि गर्ने कुरालाई पनि दैनिक नेपालगन्जले आफ्नो प्राथमिकतामा राखोस् ।*

२०६८ सालको साउन-भदौतिर नेपालगन्जमा एउटा हल्ला ब्यापक फैलियो । 'भूमि र झलक मिलेर नयाँ पत्रिका प्रकाशन गर्दैछन् रे' भन्ने । त्यस समय नेपालगन्जमा दर्जन भन्दा बढी दैनिक पत्रिका प्रकाशन हुन्थे । म त्यतिवेला रेडियो भेरी आवाजमा काम गर्थें । संधै विहान साढे ६ वजे रेडियो कार्यक्रम पत्रपत्रिकाको संगालोमा प्रत्येक पत्रिकाबाट एउटा एउटा समाचार पढ्दा आधा घण्टाको समयले पुग्दैनथ्यो । विज्ञापनमा पनि त्यस्तै अस्वस्थ्य प्रतिस्पर्धा । एउटा पत्रिकाले ५ सय रुपैयाँमा छाप्न ठिक्क पारेको विज्ञापन अर्को पत्रिकाका कर्मचारी गएर ३ सयमा फुत्काउथे । पत्रिकामा गरेको विज्ञापन ब्यापार ब्यवसायको लागि लगानी हो भन्ने मानसिकता ब्यापारी ब्यवसायीमा थिएन । चिनजानका आधारमा विज्ञापन उठाउनुपर्ने बाध्यता थियो । ब्यवसायीले पत्रिकालाई दिएको विज्ञापन सहयोग दिएको भन्ने सम्झन्थे ।

यस्तो अवस्थामा फैलिएको नयाँ पत्रिका प्रकाशनको हल्लालाई मैले सुरुमा विश्वास नै गर्न सकिँन । एक दर्जन पत्रिकाको भीड र अस्वस्थ्य प्रतिस्पर्धामा नयाँ पत्रिका ! अनि मनमनै सोचें साथीहरुको बुद्धि विग्रिएछ । त्यसैबेला अचानक एक दिन पत्रिकाका सम्पादक भूमि भण्डारी वीपीचोक नजिकैको मेडिकल कलेज अगाडि मिराको पसलमा चिया खाँदै भेटिए । मलाई साँच्चै पत्रिका प्रकाशन हुँदैछ भन्ने कुरामा विश्वासनै थिएन । त्यसैले भूमिलाई प्वाक्क भनिहालें, 'तपाईहरुको त बुद्धि बिग्रेछ ।' उनी असमान्जस्यमा परेजस्तो गरेर भने, 'किन ?'

'मैले सुनेको तपाईहरु नेपालगन्जमा पत्रिका प्रकाशन गर्दै हुनुहुन्छ रे ?' मेरो यस्तो टिप्पणीमा भूमिलाई झोँक चलेछ कि क्या हो जवाफ फर्काए, 'बुद्धि विग्रेको होइन । हामीले बुद्धिमानी काम गर्दै छौं । हाम्रो अध्ययनले नेपालगन्जमा एउटा राम्रो र गुणस्तरीय दैनिक पत्रिकाको खाँचो छ भन्ने देखाएको छ त्यो हामी पूरा गर्दैछौं ।' उनको यस्तो जवाफले म नाजवाफ भएँ ।

नयाँ टिमबाट पत्रिका प्रकाशन भएपछि यो तुलनात्मक रुपमा नेपालगन्जका अन्य दैनिक भन्दा फरक देखिन थाल्यो, सामाग्री, निष्पक्षता र आकारमा समेत । दैनिक नेपालगन्जमा छापिएका समाचार बढि सन्तुलित र तथ्यपरक पाइन थाले । दर्जन बढि दैनिकहरुको भीडमा प्रकाशन सुरु भएको केही समयमै यसले नेतृत्व लिन थाल्यो, जुन अहिलेसम्म कायम छ । प्रकाशनको यो दुई वर्षको अवधिमा दैनिक नेपालगन्जले



मेरो त्यो सोचाईलाई गलत सावित गरिदियो । नेपालगन्जमा पत्रकारिताको जगतमा दैनिक नेपालगन्जले नयाँ आयाम थपेको छ । सबभन्दा ठूलो उपलब्धी पत्रकारितामा गुणस्तरीयता बढाएको छ । ब्यवसायीमा पनि पत्रिकामा दिएको विज्ञापन ब्यवसायको लागि लगानी हो भन्ने मानसिकताको विकास गराएको छ । दैनिक नेपालगन्जको यो योगदानले त्यसपछि प्रकाशन सुरु गरेका पत्रपत्रिकाले पनि लाभ लिएका छन् ।

पत्रिका प्रकाशन आफैमा उपलब्धी होइन । त्यसले समाजमा पार्ने सकारात्मक प्रभाव पत्रिका र पत्रिकाको टिमको सफलता हो । पत्रिका पुनर्प्रकाशनको दोश्रो वर्ष पूरा हुँदा दैनिक नेपालगन्ज त्यो सफलता तर्फ अघि बढेको छ । तर पनि अझै धेरै गर्न बांकी नै छ । हाम्रो पत्रकारिता अहिले लोकतन्त्र र

दिगो शान्ति स्थापनाकालागि मिसनमा छ। लोकतन्त्र र दिगो शान्तिमा मात्र हामीले स्वतन्त्र पत्रकारिताको परिकल्पना गरेका छौं। मुलुकमा शान्ति स्थापनाको लागि स्थानीयस्तरमा प्रकाशन हुने दैनिक नेपालगन्ज जस्तो लोकप्रिय पत्रिकाको ठूलो भुमिका हुन्छ। पत्रिकाको नियमित पाठक भएको नाताले यो विषयलाई पत्रिकाले आफ्नो प्राथमिकतामा पारोस् भन्ने मेरो एउटा चाहना हो।

दशवर्ष बढी चलेको सशस्त्र द्वन्द्वको सबैभन्दा बढी मार महिलामा परेको छ। त्यसैले मुलुकको शान्ति निर्माण प्रकृयामा पनि महिलाको भूमिका उत्तिकै छ। महिलाका भोगाई, उनीहरुको अनुभव, महिलाका माग आदि विषयलाई उठाउन पुरुषका भन्दा महिला बढि सक्षम हुन्छन्। जबसम्म महिला पत्रकारहरु व्यवसायिक रुपमा पत्रकारितामा आउदैनन्, ५१ प्रतिशत रहेको भनिएका महिलाका सवालहरु बाहिर आउन सक्दैनन्। त्यसैले महिला पत्रकारलाई अवसर दिने र गुणस्तर वृद्धि गर्ने कुरालाई पनि दैनिक नेपालगन्जले आफ्नो प्राथमिकतामा राखोस्। महिला पत्रकारिता स्थानीय स्तरमा एउटा ठूलै चुनौतीको रुपमा देखा परेको छ। स्थानीय स्तरमा प्रकाशन हुने पत्रिकामा काम गर्ने एउटा पत्रकारले पत्रिकावाट आउने आम्दानीले आफ्नो र उसको परिवारका लागि आवश्यक पर्ने आधारभूत आवश्यकता पूरा गर्न सक्दैन। त्यसैले एउटा राम्रो पत्रकार संधै आर्थिक सवलीकरणका लागि अर्को राम्रो विकल्पको खोजिमा हुन्छ। ति मध्ये पनि विकल्प खोज्नेहरुमा महिला बढी हुन्छन्। यो कुरालाई ध्यानमा राख्दै महिला पत्रकारिताको गुणस्तरीय विकासमा योगदान गर्न सकोस् मेरो शुभकामना छ।

महिला पत्रकारिताको विकास गर्दै, मुलुकको शान्ति निर्माण प्रकृयालाई सघाउदै पत्रिकाको मेरुदण्डका रुपमा रहेका पत्रकार र कर्मचारीमा आर्थिक सवलीकरण गर्दै दैनिक नेपालगन्जले गुणस्तरीयता र दिगोपनको महल ठड्याओस्, मेरो शुभकामना छ।

*(पत्रकार आचार्य सञ्चारिका समूह मध्यपश्चिमकी संयोजक हुन्।)*

# पत्रकारितामा निखार ल्याउँदै



**● गोविन्द शर्मा**

२०६८ सालको साउनमा नेपालगन्जका स्थापित पत्रकार झलक गैरेको अग्रसरतामा नयाँ दैनिक पत्रिका प्रकाशनको चर्चा चल्यो। त्यसको केही दिनपछि झलक दाईले मलाई भेट्न बोलाउनुभयो। त्यसबेला उहाँ कालपृष्ठ दैनिकको कार्यकारी सम्पादकका रुपमा कार्यरत रहनुभएको थियो। उहाँलाई भेटेर कुरा सुन्दा म तिनछक परेँ। कारण दैनिक पत्रिका प्रकाशनको चर्चा चलेकोमा उहाँले साप्ताहिक र पाक्षिक पत्रिका प्रकाशन गर्न लागेको कुरा सुरु गर्दै मलाई सहयोगको आग्रह गर्नुभयो। त्यसबेला म स्थानीयस्तरमा रेडियो भेरी आवाज एफममा मात्रै कार्यरत रहेको थिएँ। झलक दाईको कुरा सुनेपछि मैले दाई अब नेपालगन्जमा साप्ताहिक र पाक्षिक पत्रिका चलाएर स्थापित हुन गाह्रो छ। त्यसकारण तपाई दैनिक पत्रिका नै प्रकाशन गर्नुस्, सुझाव दिएँ।

करिब एक महिनाको तयारीपछि झलक गैरे प्रकाशक, भूमि भण्डारी सम्पादक र अच्युत सुवेदी प्रबन्ध निर्देशक भएर दैनिक नेपालगन्ज बजारमा यसअघि स्थानीय पत्रकारितामा नदेखिएको नयाँ स्वरुपले आयो। यहाँ दैनिक नेपालगन्जको प्रकाशन भएपछि नै अन्य पत्रिकाको स्तरमा समेत सुधार आएको देख्न सकिन्छ। त्यसअघि 'लिगल साइज' का अधिकांश पत्रिका थिए भने दैनिक नेपालगन्जको प्रकाशन पछि अधिकांश पत्रिकाको साइज बढेको छ। व्यवसायिक प्रतिष्प्रर्धामा विकल्प पनि थिएन, त्यसैले थोरै भएपनि दैनिक नेपालगन्जले नेपालगन्जको पत्रकारिताको गुणस्तर सुधारमा सहयोगी भूमिका खेलेको छ भन्ने मलाई लाग्छ।

दैनिक नेपालगन्जले पुनर्प्रकाशन थालेको केही दिनपछि पत्रिकामा आवद्ध भएर झण्डै २० महिनासम्म मैले काम गर्ने मौका पाएँ। त्यसबीचमा आफुलाई धेरै क्षेत्रमा सुधार गर्ने मौका र अवसर पाएँ। झलक गैरे र भूमि भण्डारीबाट मैले धेरै ठूलो सहयोग पाएँ, यसले मलाई पत्रकारितामा निखार ल्याउन महत्वपूर्ण सहयोग मिल्यो। यसअघि पनि मलाई पत्रकारितामा पहिलोपटक अवसर र मौका दिने आदरणीय दाजु गोपी बुढा र दिदी करुणा थापा तथा रेडियो भेरी आवाजका समाचार प्रमुख सिर्जना आचार्यबाट मैले सुरुवातमा पत्रकारिता सिक्ने अवसर पाएँ। यस सिकाइलाई निरन्तरता दिँदै दैनिक नेपालगन्जमा प्रवेश गरेपछि मैले आफुलाई अझ खारिलो बनाउन सकेँ जस्तो लाग्छ। हुनत, मलाई नेपालगन्जमा पत्रकारितामा प्रवेश गराउनेहरु महेन्द्रराज शर्मा, शिव डोटेल, रेशम विरही, अछरी पोखेल र गणेश जिसी लगायत हुनुहुन्छ।

क्याम्पसमा पढ्दाका दिनमा कुनै विद्यार्थी संगठनको जिल्ला अध्यक्ष भएर पार्टीगत राजनीतिमा आवद्ध म अहिले पत्रकारितामै भविष्य खोज्दै संघर्षरत छु। यसमा दैनिक नेपालगन्जको ठूलो भूमिका छ। अहिले म दैनिक नेपालगन्जमा भौतिकरुपमा उपस्थित छैन। तर मलाई आज पनि दैनिक नेपालगन्जको उत्तिकै माया लाग्छ। म जस बेला दैनिक नेपालगन्जमा दिउसोदेखि रातिसम्म बिताउँथे, प्रत्येक दिनजसो मेरा बाइलाइन हुन्थे। अहिले दैनिक नेपालगन्जमा बाइलाइन समाचार लेख्न नसक्ने भएपनि माया उत्तिकै छ। वार्षिकोत्सवको अवसरमा अझै प्रगति र सफलताको कामना।

*( पत्रकार शर्मा लोकप्रिय सन्देशका प्रकाशक हुन् )*

# पत्रकारितामा महिला



□सुरेन्द्र काफ्ले

समावेशीका चर्का कुरा जोडतोडले उठेपनि नेपाली पत्रकारितामा महिला सहभागिताको अवस्था टिठ लाग्दो छ । पत्रकारितामा महिलाको सन्तोषजनक भएपनि प्रवेश भएपनि निरन्तरताको अवस्था एक दमै न्यून छ । विद्युतीय माध्यम तुलनात्मक रुपमा आश लाग्दो भएपनि महिला सहभागिता पुरुषको तुलनामा कम नै छ। छापा माध्यममा अत्यन्न न्यून रहेको छ। निर्णायक भूमिका त कोही पनि छैनन् भन्दा पनि फरक नपर्ला। सहभागिता कम हुनु र पलायन हुनुमा सञ्चारमाध्यमले उपलब्ध गराउने सेवा सुविधा नै प्रमुख कारण हो । अधिकाशले नियुक्ती पत्र नै दिदैनन्, सञ्चारमाध्यमले उपलब्ध गराउने पारिश्रमिक अत्यन्तै न्यून हुन्छ। कोठा भाडा समेत नपुग्ने पारिश्रमिक दिइन्छ त्यो पनि नियमित हुँदैन ।

पत्रकारितामा लाग्दा जति धेरै चुनौतीको समाना गर्नु पर्छ त्यसको तुलनामा अन्य क्षेत्रमा पक्कै कम चुनौती सामाना गरे पुग्छ। चुनौतीसँगसँगै खर्चिनु पर्ने समयको तुलनामा सञ्चारसस्थाबाट पाउने पारिश्रमिक र सेवा सुविधा निकै कम भएकोले पत्रकारितामा महिलाको निरन्तरता कम हुने गरेको हो ।

राम्रो जागिर पाएमा पत्रकारिता छोडेर अन्य पेशा छान्ने गरेकोहरु प्रशस्त पाइन्छ। पत्रकारिता पेशामा प्रवेश गर्ने नाम कमाउने अनि राष्ट्रिय तथा अन्तराष्ट्रिय गैरसरकारी संस्थामा हामफाल्ने प्रवृति महिला पत्रकारमा बढि नै देखिन्छ। आकर्षक तलब, सेवासुविधा र सिमित कार्यअवधि जस्ताबाट प्रभावित भएर पत्रकारिता छोड्नेमा पुरुषहरु पनि नभएका भने होइनन्। तर पुरुषको तुलनामा महिला संख्या उल्लेख्य छ ।

विवाहपछि त अझ धेरैले पत्रकार महिलाले पत्रकारिता छाड्ने गरेका छन् । मोफसलमा पत्रकारिता गर्नेको कुनै समय नहुने भएको बालबच्चाको हेरचाह, विवाहपछि परिवारिक जिम्मेवारी थपिँदा महिलाहरुले पत्रकारितामा समय दिन सक्दैनन् । जसका कारण पेशा नै छोड्नु पर्ने अवस्था आउँछ। कतिपय भने बालबच्चा हुर्काएर पत्रकारिता फर्किएका पनि छन् तर यो संख्या नगन्य छ। महिला प्रजनन् स्वास्थ्य अधिकारलाई ख्याल गरि गर्भवती र सुत्केरी अवस्थामा विशेष सुविधा तथा सहुलियत दिनुका साथै शिशुलाई स्तनपान गराउन जानका लगि समय दिन सके विवाह पछिको पलायन दरमा कमि आउन सक्छ ।

यसै पनि पत्रकारितालाई 'अड आवर जब' भनिन्छ । पत्रकारिताको कुनै समय हुँदैन रात बेरात पनि घरबाट निस्कनु पर्ने हुन्छ। यस्तो अवस्था परिवारको असहयोग र घरायसी जिम्मेवारीका कारण पलायन हुने गरेका उदाहरण पनि प्रशस्त छन् ।

कामको सिलसिलामा पुरुष पत्रकारसँगै हिड्दा चरित्र हत्या गर्ने, कतिपय पुरुष पत्रकारले नै गलत नियतले हेर्ने कारण पनि निर्वाध रुपमा पत्रकारिता गर्न महिलालाई समस्या छ। यहि कारणले धैरै पत्रकार महिला पेशाबाटै पलायन भएका छन्। पितृसतात्मक सोंचका कारण पनि पत्रकारितामा निरन्तरता दिनेको सख्या कम भएको हो ।

महिला पत्रकारको सहभागिता कम भएकाले नै नेपालको कुल जनसख्याको आधा भन्दा बढि हिस्सा ओगटेका महिला विषयमा चाहिए अनुसार समाचार बन्ने गरेका छैनन्।

पत्रकारितामा पुरुषको सहभागिता महिलाको तुलनामा धेरै भएकोले एक दुई जना वा केहीले छोड्दैमा केहि फरक पर्दैन तर महिलाको सन्दर्भमा सहभागिता नै कम भइरहेको अवस्थामा सिमित संख्यामा रहेका महिला पत्रकारले पत्रकारितालाई निरन्तरता नदिंदा उपस्थिति न्यून देखिएको हो ।

महिलाको पत्रकारिता निरन्तरताका लागि सञ्चार माध्यमले लैङ्गिक मैत्री बताबरण बनाउनु जरुरी छ। सकारात्मक विभेदको नीति अबलम्बन गरि महिला

*कामको सिलसिलामा पुरुष पत्रकारसँगै हिड्दा चरित्र हत्या गर्ने, कतिपय पुरुष पत्रकारले नै गलत नियतले हेर्ने कारण पनि निर्वाध रुपमा पत्रकारिता गर्न महिलालाई समस्या छ । यहि कारणले धैरै पत्रकार महिला पेशाबाटै पलायन भएका छन् । पितृसतात्मक सोंचका कारण पनि पत्रकारितामा निरन्तरता दिनेको सख्या कम भएको हो ।*

पत्रकारको सहभागिता बढाउन सकिन्छ । सञ्चार माध्यमले अवसर, नियमित पारिश्रमिक, अध्ययन तथा तालिमको सुविधामा महिलाहरु समानुपातिक ढंगबाट उपलब्ध गराएमा पत्रकारितामा महिलालाई टिकाइराख्न मद्दत पुग्ने छ ।

सञ्चार क्षेत्रमा महिला सहभागिता बढाउन सरकारले गरेका घोषणा र निर्णय कार्यान्वयन नहुँदा पनि पलायन भइरहका छन् । अन्तरिम संविधानले पनि हरेक क्षेत्रमा महिलाको ३३ प्रतिशत सहभागिताको ग्यारेन्टी गरेको छ । त्यस्तै उच्चस्तरिय मिडिया सुझाव आयोगले सञ्चारमाध्यममा ३३ प्रतिशत महिलाको सहभागिताको कुरा उठाएको छ । समाजमा पितृसत्तात्मक मूल्य, मान्यता र सोंचका कारणले कानुन कार्यान्वयन हुन नसक्दा पत्रकारितामा महिलाको सहभागितामा अभिबृद्धि हुन सकेको छैन । सरोकारवाला सबैले यसप्रति आफ्नो ध्यान दिइ बेलैमा सुधारका कदम चाल्नुपर्छ ।

*(अन्नपूर्ण पोष्मा कार्यरत पत्रकार काफ्लेले 'पत्रकारितामा महिला सहभागिता' विषयमा स्नातकोत्तरको शोध गरेका छन् ।)*




**योगदानको सम्मान :** पत्रकारिता क्षेत्रमा लामो समय योगदान पुऱ्याएकी करुणा थापालाई एक कार्यक्रमबीच सम्मान गरिँदै । सोही कार्यक्रममा सम्मानित पत्रकार महिला दिपा आले ।

# दैनिक नेपालगन्जदेखि युगाण्डासम्म



**बिशाल रानामगर**

*म भौतिक रुपमा नेपालगन्जमा नभए पनि म हरेक दिन दैनिक नेपालगन्जको साथमा छु अनलाइनका माध्यमबाट । मेरो यहाँको दिनचर्याको सुरुवात इन्टर नेटमा दैनिक नेपालगन्ज डाउनलोडबाट हुन्छ । नेपालगन्जको पत्रकारितामा एउटा नयाँ आयामको विकास गर्न अघि बढिरहेको दैनिक नेपालगन्जसँग जोडिन पाउनु मेरो लागि अहोभाग्य हो । जो म मेरो पत्रकारिता जिवनभर जारी रहने अपेक्षा गर्दछु । झलक सर मलाई यहाँको दैनिकिबारे साप्ताहिक रुपमा लेख्न भनिरहनुहुन्छ तर पनि मैले जारी राख्न सकेको छैन । मलाई लाग्छ दैनिक नेपालगन्जमा प्रकाशित मेरा लेखहरु जिवनपर्यन्त अभिलेख हुनेछ ।*

साल २०६९ चैत्रको अन्तिम साता । गजेन्द्र दाईको सः मिलको टेबलमा रहेको दैनिक नेपालगन्ज पत्रिका मेरो आँखा गयो । पत्रिका पल्टाउँदै जाँदा एउटा विज्ञापन थियो जसमा उपसम्पादकको चाहिएको सूचना थियो दैनिक नेपालगन्जको लागि । दैनिक नेपालगन्जले जब पुनर्जीवन पायो । यो सँग औपचारिक रुपमा गाँसिने मेरो भित्रि चाहना नभएको होइन तर अवसर मिलिरहेको थिएन । जब विज्ञापन देखें मलाई लाग्यो यो मेरो लागि पत्रकारितामा पुनर्प्रवेश गर्ने राम्रो माध्यम हो । उसो त बाल पत्रकारका रुपमा २०५९ सालतिरबाटै मैले समाचार लेख्न थालेको थिएँ । त्यस पश्चात् नेपाली एक्सप्रेस, भेरी एफएम, सुदूर सन्देश, देशान्तर साप्ताहिक, मध्यपश्चिम सन्देश, नेपालगन्ज टाइम्स हुँदै साल २०६५ तिरबाट म पत्रकारितामा निस्क्रिय थिएँ । विविध कारणवस मैले पत्रकारितालाई रोकें र सामाजिक क्षेत्रमा सक्रिय रहें ।

सामान्यतया बाँकेबाट प्रकाशित पत्रिकाहरुमा जनशक्ति खोजीका विज्ञापन देखिंदैनन् । यो व्यवसायिक अभ्यासको कुरा पनि हो । दैनिक नेपालगन्जमा प्रकाशित विज्ञापन अनुसार मैले प्रकाशक तथा बाँकेका अग्रज पत्रकार झलक गैरेलाई सम्पर्क गर्दा उहाँले तत्कालनै 'लौन मित्र तपाई आए त झनै राम्रो हुने भयो' भन्ने आशयको जवाफ पाउँदा मलाई पुनः पत्रकारितामा जम्ने रहर जाग्यो । जसअनुसार साल २०७० को पहिलो दिनबाटै म पनि दैनिक नेपालगन्जको अङ्ग बनें, उपसम्पादकको नियुक्तिपत्र हातमा राखेर । नेपालगन्जको विभिन्न सञ्चार गृहभन्दा दैनिक नेपालगन्जसँग जोडिँदा मैले केही व्यवसयिकताको अनुभव गरें । म दैनिक नेपालगन्जमा जोडिएको पहिलो दिननै नियुक्ति पत्र दिइनु र मैले दुई महिनामात्र काम गरे पनि हरेक महिनाको अन्तिम दिन न्यूनतम पारिश्रमिक निर्धारण समितिले तोके बमोजिमको पारिश्रमिक पाएको थिएँ ।

जेठको दोस्रो साता हुनुपर्छ मलाई डेनमार्कबाट इमेल आएको युगाण्डामा काम गर्न । बेलुका समाचार सम्पादन गरिरहेकै बेला इमेल आएको थियो । सबैभन्दा पहिले मैले कम्प्युटरमा रहेका मित्र देवेन्द्रजी र सँगै रहनुभएको झलक सरलाई खबर सुनाएँ । पत्रिकाका सम्पादक भूमि भण्डारी पहिलेनै मैले जसरीनै जाम्बियामा काम गरिरहेको हुनाले झलक सरलाई कामको प्रकृति बारे थाहा थियो । मेरो इमेल थाहा पाएपछि उहाँले तुरुन्तै उठेर मलाई अंगालो हाल्दै बधाई दिनुभयो । बधाई दिँदै गर्दा उहाँले यो पनि भन्न छुटाउनु भएन कि, 'होइन यार दैनिक नेपालगन्जमा आउने बित्तिकै सबै विदेश जाने अवसर पाउँछन् ।' यति भनिरहँदा उहाँको अनुहारमा मैले अब केही कुरा फेरि गुमाउने भए भन्ने भाव मैले देखिरहेको थिएँ ।

उपसम्पादकको रुपमा मैले दैनिक नेपालगन्जमा काम गर्दा चार वर्ष पछिको नेपालगन्जको पत्रकारितामा आएको परिवर्तनलाई महसुस गर्ने अवसर पाएँ । नेपालगन्जमा प्रिन्ट तथा इलेक्ट्रोनिक मिडिया भरमार खुले पनि यसको स्थायित्वको समस्या भने यथावतै छ । त्यसो त नेपालगन्जमा दैनिक पत्रिका खुल्ने र बन्द हुने क्रम नौलो होइन । समाचार लेखन, सम्पादन र सम्प्रेषणमा दैनिक नेपालगन्जले अपनाउने तरिकाले भने मलाई अति प्रभावित बनायो । अहिले नेपालगन्जका दैनिकहरुमा प्रेस विज्ञप्ती वा बनिबनाउ समाचार पठाइन्छ ता कि सजिलै छापियोस् । र हुन्छ पनि त्यस्तै, प्रायः एफएम वा दैनिक पत्रिकाहरुले इमेलबाट आएको समाचारको पुर्णविराम समेत फरक नपारि छाप्ने गर्छन् । 'इमेलबाट आउँने समाचारलाई फरक बनाउनुपर्छ है बिशाल जी', झलक सरले दैनिक मलाई भन्ने एउटा वाक्य थियो यो । यदि कुनै कुरा कमी छन् भने बरु फोन गरेर हुन्छ या कसरी पूर्ण बनाउनको लागि मलाई उहाँले सम्झाइ रहनुहुन्थ्यो ।

'बिशाल जी ! आजको पत्रिका हेर्नु भो ।' बिहान ओछ्यानमै भएको बेला फोनमा झलक सर आवाज सुने । आवाज अलि आत्तिएको जस्तो थियो । 'किन र सर ?', प्रत्युत्तरमा मैले भने । 'अलि अलि गडबड भएछ यार ।' एक बिहान उहाँले भन्नु भयो ।

तत्कालै सिरानमा रहेको पत्रिका उठाएँ त्यो दिनको मेन न्युजमा मेरो नाम रहेछ । जबकी म त्यो कार्यक्रममा गएको पनि थिइन र भनौ त्यो समाचार मेरो बाइलाइनमा आउनु मेरो लागि अलि समस्या हुनसक्थ्यो । समाचारमा आफ्नो बाइलाइन देखेर म एकछिन् रनभुल्लमा परैं । 'तर चिन्ता गर्नु पर्दैन मैले कुरा गरिसकेको छु ।' मलाई आश्वासन दिंदै उहाँले भन्नुभयो । समाचार सत्य थियो बस् सवाल यति मात्र थियो कि मेरो बाइलाइन आउँदा केही समस्या हुन सक्थ्यो । तर तथ्यगत र सन्तुलित बनाएर लेखिएको समाचार भएकाले जसको बारेमा समाचार लेखिएको थियो उसले पनि प्रश्न उठाउन भने सकेन । वास्तवमा प्राविधिक कारण बस मेरो नाम बाइलाइनमा गएको थियो । तर, झलक सरमा त्यसप्रतिको उच्च संवेदनशीलताले मलाई स्मरणीय बनायो ।

म युगाण्डा आउने पक्का पक्कि भएपछि दैनिक नेपालगन्जका झलक सर, देवेन्द्र जी, लक्ष्मी बहिनी, विनय जी अनि मार्केटिंग गर्ने रामबहादुर अंकल जी सबै खुसी थिए । तर पनि झलक सर भन्नुहुन्थ्यो, 'मलाई फेरि अर्को मान्छे खोज्नुपर्ने भो यार ! '

म भौतिक रुपमा नेपालगन्जमा नभए पनि म हरेक दिन दैनिक नेपालगन्जको साथमा छु अनलाइनका माध्यमबाट । मेरो यहाँको दिनचर्याको सुरुवात इन्टरनेटमा दैनिक नेपालगन्ज डाउनलोडबाट हुन्छ । नेपालगन्जको पत्रकारितामा एउटा नयाँ आयामको विकास गर्न अघि बढिरहेको दैनिक नेपालगन्जसँग जोडिन पाउनु मेरो लागि अहोभाग्य हो। जो म मेरो पत्रकारिता जिवनभर जारी रहने अपेक्षा गर्दछु । झलक सर मलाई यहाँको दैनिकिबारे साप्ताहिक रुपमा लेख्न भनिरहनुहुन्छ तर पनि मैले जारी राख्न सकेको छैन । मलाई लाग्छ दैनिक नेपालगन्जमा प्रकाशित मेरा लेखहरु जिवनपर्यन्त अभिलेख हुनेछ। १६ औं वर्ष प्रवेशका अवसरमा दैनिक नेपालगन्ज टिमलाई मेरो साधुवाद । निश्पक्ष भएर अघि बढौं, नेपालगन्जले पत्रकारितामा नयाँ स्वाद र नयाँ विश्वास कायम गर्नेछ ।

*( दैनिक नेपालगन्जका पूर्व उपसम्पादक रानामगर हाल अफ्रिकी राष्ट्र युगाण्डामा अन्तर्राष्ट्रिय गैर सरकारी संस्थामा कार्यरत छन् ।)*

# छापामा मेरो अनुभव



**● लक्ष्मी वि.सी.**

सानै देखि पत्रकार बन्ने ठुलो इच्छा । जब नेपालगन्ज बसेर पत्रकारिता गर्न थाले सोही बेला देखी झलक गैरेलाई चिन्थें । त्यतिबेला पत्रकार महासंघको सभापति हुनुहुन्थ्यो । उहाँको भाषण गर्ने शैली बोल्ने तरिका, उहाँका कुराहरु सुन्दा एकदमै भद्र स्वभावको लाग्थ्यो । नजिक हुन पाए धेरै कुराहरु सिकिन्थ्यो होला भन्ने मनमा थियो, तर समय मिलेको थिएन । जब उहाँले आफ्नै पत्रिका दैनिक नेपालगन्ज सन्चालन गर्नुभयो सोही बेला देखि नै मलाई पत्रिकामा संलग्न हुन प्रस्ताव गर्नुभएको थियो । सकिरहेको थिइन । तर पनि बेला बेलामा समाचार तथा आर्टिकलहरु लेख्न हौस्याइरहनुहुन्थ्यो । छापिइ पनि रहेको थियो ।

सानो हुदा भित्तेपत्रिकाहरु निकाल्ने गरे पनि औपचारिक रुपमा विद्युतिय माध्यम बाट मेरो पत्रकारिता क्षेत्रमा प्रबेश भएकाले छापा माध्यम मेरा लागि नौलो थियो । अग्रज विशाल दाइको माध्यम बाट झलक सरले मलाइ पत्रिकामा संलग्न हुन पुन प्रस्ताव गर्नुभयो । यसपटक केही गर्ने आँटका साथ पत्रिकामा प्रबेश गरें । काम गर्दै जाँदा धेरै कुराको अनुभव भयो ।

झलक सरले बारम्बार पत्रकार महिलाहरु पलायन भइरहेको अवस्थामा तपाई क्रियाशिल हुनुपर्छ भनेर हौस्याइरहनुहुन्थ्यो । रिपोर्टिडका लागि दैनिक नयाँ नयाँ विषयबस्तुहरु दिनुहुन्थ्यो । म पनि सकेजति पुर्ण रुपमा आफ्नो जिम्मेवारी निर्बाह गर्ने प्रयासमा हुन्थें । यसरी गरे ठिक हुन्थ्यो भन्दै सिकाउनुहुन्थ्यो । काम गर्न कुनै किसिमको अप्ठेरो थिएन । स्वतन्त्ररुपमा काम गर्ने वातावरण थियो । दैनिक पत्रिकामा काम गर्न थालेको मेरो पहिलो अनुभव भएकाले कतिपय रिपोर्टिडहरु गाह्रे लाग्थ्यो भने कतिपय सजिलो । कुनै पनि समाचार लेख्दा खाली समाचारका लागि मात्र नभएर गहिराइ सम्म पुगि समस्याको मुख्य जड पत्ता लगाउनुपर्छ भन्ने मान्यता झलक सरको थियो । उहाँसँग काम गर्दा यस्ता धेरै विषयको सिकाइ अवसर भएको स्मरणीय छ ।

समाचार खाली जानकारी दिनका लागि मात्र नभएर समस्याको समाधानका लागि पनि हुने भएकाले गहिराइ सम्म पुग्नुपर्छ भन्ने कुरा मैले झलक सर संग काम गर्दा सिके । कुनै पनि काम ठिक समयमा गर्नुपर्छ भन्ने उहाँको मान्यता थियो । दैनिक खानपान, संगत देखि लिएर पारिवारिक कुरा पनि हुने हुनाले पारिवारिक वातावरण थियो ।

मैले थोरै समयमा दैनिक नेपालगन्जमा आबद्ध भएर काम गरे तर धेरै कुराहरु सिक्न पाए । बाँकेमा महिला पत्रकारहरु पुरुषको तुलनामा तुलनात्मक रुपमा कमी छन त्यसमा पनि छापा माध्यममा काम गर्ने महिलाहरु त झनै थोरै मात्रामा रहेका छन् । स्रोत साधन र समयको सदुपयोग गर्न नसक्दा विद्युतिय माध्यमको तुलनामा छापा माध्यममा काम गर्ने महिलाहरुको कमी भएको हो की भन्ने मलाइ लागेको छ । मलाई विस्वास गर्दै झलक सरले पत्रिकाको सबै जिम्मेवारी समाहल्न सक्नुपर्छ है भन्दै हौस्याइरहनुहुन्थ्यो । मेरो केही क्षमता देखेर नै उहाँले पत्रिकामा बोलाउनुभएको हो, तर मैले उहाँको विस्वास पुरा गर्न सकिन । मेरो आफ्नै बाध्यताले दैनिक नेपालगन्जमा आबद्ध त छैन् तर सधै सहकार्यको अपेक्षा गर्दछु । पत्रकारिता क्षेत्रमा आउन चाहने र भविष्य खोजिरहेकाहरुका लागि दैनिक नेपालगन्जले ठूलो अवसर दिइरहेको छ, निरन्तरताको आशा गर्दै , नेपालगन्ज क्षेत्रमा सबैको मन जित्ने सफल पत्रिकाको रुपमा रहोस् पत्रिकाको सफलताको कामना सहित दैनिक नेपालगन्ज परिवारको प्रगतिको कामना ।

*(दैनिक नेपालगन्जकी पूर्व संवाददाता विसी रेडियो हिमाल आबद्ध छिन् ।)*

# सञ्चारकर्मी र अधिकारकर्मीको सहकार्य



- बालकृष्ण बस्नेत

*नेपालगन्ज सहरको लोकप्रिय अखवार हुनुको नाता मात्र हैन पत्रकारितालाई पेशा बनाएका श्रमजिवी पत्रकारको नेतृत्व पाउनुको नाताले पनि दैनिक नेपालगन्जले आफूलाई अरुभन्दा फरक बनाउन सक्षम भयो । सक्षमताको मापदण्ड उमेर र वर्षलाई नमान्ने हो भने प्रकाशनको छोटो अवधिमा दैनिक नेपालगन्जले कमाएको विश्वसनियता र पाठक उसको खुबी हो । यति भन्दैमा दैनिक नेपालगन्जले पात्तिने अवस्था छैन ।*

*मोफसलको पत्रकारिता लेख लेखेजस्तो सहज पक्कै छैन तर दैनिक नेपालगन्जमा पक्कै पनि चुनौतीसँग जुध्ने अदम्य साहस र आत्मविश्वास छ । त्यही आत्मविश्वास ले नै यस पत्रिकालाई यहाँसम्म ल्याइपुर्‍याएको हो ।*

नेपालमा अखवार प्रकाशनको इतिहास केही पुरानो भए पनि व्यवसायिक पत्रकारिताको इतिहास त्यति लामो छैन । प्रारम्भका धेरै कालखण्ड फरक फरक निरंकुशता र एकदलीय व्यवस्थाको विरुद्ध मिसन पत्रकारिताको रुपमा संघर्ष गरेर बिताएको नेपाली पत्रकारिताले वि.स. ०४६ सालमा प्रजातन्त्रको पुनःस्थापना पछि व्यवसायिकताको थालनी गरेको हो । ०४६ पछिकै कालखण्डमा राजधानीबाट विस्तारित हुँदै मोफसलमा पनि व्यवसायिक पत्रकारिताको सुरुवात भयो ।

त्यस्तै नेपालमा संगठित रुपमा मानवअधिकार आन्दोलन पनि प्रजातन्त्रको पुनःस्थापना पछि नै सुरु भएको हो । पञ्चायती व्यवस्थाको पछिल्लो दशककै अवधिमा पहिलो पुस्ताका मानवअधिकार अगुवा र केही राजनीतिकर्मीहरुले मानवअधिकारका लागि संगठित हुने प्रयास गरेपनि त्यो विशुद्ध रुपमा मानवअधिकार भन्दापनि राजनीतिक प्रेरित अभियान थियो । खुल्ला मानवअधिकार अभियान सञ्चालनमा प्रतिवन्धित तत्कालिन समयमा पत्रकारिताको भैं तत्कालिन मानवअधिकारको मिसन पनि पञ्चायती व्यवस्थाको समाप्ति र प्रजातन्त्रको स्थापना नै थियो । यसर्थ नेपालमा संगठित र खुल्ला मानवअधिकार अनि व्यवसायिक पत्रकारिता र प्रेस स्वतन्त्रताको अभियान प्रजातन्त्र पुनःस्थापनासँगै सुरु भएका हुन् ।

प्रजातन्त्र पुनर्स्थापना पछि बनेको तत्कालिन नेपाल अधिराज्यको संविधान ०४७ ले प्रेस स्वतन्त्रता र संघ संस्था खोल्न पाउने अधिकारलाई संवैधानिक ग्यारेण्टी गरेपछि राजधानीभन्दा बाहिरका सहरमा पनि दैनिक अखवारको प्रकाशन सुरु भयो । सोही समयमा सामाजिक न्याय र मानवअधिकारका निम्ति काम गर्ने गैर सरकारी संस्थाहरु पनि बाक्लै स्थापना भए । पुनर्स्थापित प्रजातन्त्रले शिशु अवस्था पार नगर्दै वा संस्थागत नहुदै साथै पत्रकारिता र मानवअधिकार आन्दोलन सशक्त नबन्दै नेपाली राजनीतिमा अर्को कालो खण्डको सुरुवात भयो । तत्कालिन नेकपा माओवादीले वि.सं. ०५२ सालमा संवैधानिक राजतन्त्र र संसदीय व्यवस्थाको विरुद्ध भन्दै सशस्त्र युद्धको थालनी गर्‍यो । मध्यपश्चिमको रोल्पा, रुकुम र सल्यानबाट सुरु भएको सशस्त्र युद्ध देशव्यापी बन्दै जादा मध्यपश्चिम सबैभन्दा बढी आक्रान्त बन्दै गयो । युद्धको नाममा निर्दोष नागरिकले दुःख पाउने क्रम बढदै गर्दा प्रेस स्वतन्त्रता र मानवअधिकार माथि पनि खतरा बढदै गयो । फलतः विभिन्न बहानामा सञ्चारकर्मी र अधिकारकर्मी पनि युद्धका पक्षधरहरुको तारो बन्न थाले । युद्धरत दुवै पक्षबाट खतरा बढदै गएपछि समान उद्देश्यका दुई निकाय मानवअधिकारकर्मी र सञ्चारकर्मीको सहकार्य र समन्वय मजबुत बन्दै गयो । मानवअधिकार अभियानलाई संगठित रुपमा अगाडि बढाउन नेपालगन्जमा मानवअधिकार सञ्जाल नेपालगन्ज गठन भयो । जसमा नेपालगन्जस्थित सबै क्रियाशील मानवअधिकार संस्था र पत्रकार हरुको छाता संगठन, नेपाल पत्रकार महासंघ बाँके शाखासमेत आवद्ध भयो ।

मानवअधिकार सञ्जालको गठनसँगै सञ्चारकर्मी र अधिकारकर्मीका चुनौती र समस्याको बारेमा सामुहिक छलफल हुन थाल्यो । मानवअधिकार उल्लंघन र ज्यादतिका घटनाको स्थलगत अनुगमन संयुक्त रुपमा गरिने अभ्यासको थालनी भयो । यी दुई निकायको सहकार्यले खतरा न्यून मात्र हैन सूचनाको विश्वसनीयतालाई पनि बढायो । दुवै निकायका काम कारबाहीहरु एक अर्काका प्राथमिकतामा रहे । मानवअधिकार उल्लंघनका घटना र प्रतिवेदनहरु अखवारले महत्वका साथ ठाउँ दिन थाले । त्यस्तै सञ्चारकर्मीहरुको पेशागत र भौतिक सुरक्षा अधिकारकर्मीको पहिलो चासोको विषय बन्यो । केवल एउटा नीलो ज्याकेट अनि कलम, डायरी र क्यामेरालाई



नेपालगन्जमा मानवअधिकारकर्मी समेतको सहभागितामा पत्रकारहरुको र्‍याली ।

सुरक्षा कवच बनाएर अधिकारकर्मी र सञ्चारकर्मीको टोलीले जनताको मानवअधिकार रक्षाको खातिर मध्यपश्चिमका कैयन अक्करे भिरहरुको यात्रा तय गर्‍यो । राप्तीका फाँट र बाढीका डुवानहरु अनुगमन गर्‍यो । नजिकको घनिष्ठता र सहकार्यका बीच पनि पेशागत धर्मलाई पछ्याउदै घटनाको स्वतन्त्र विश्लेषण गर्ने र स्वतन्त्र दृष्टिकोण बनाउने लगायतका आचारसंहितामा भने सम्झौता भएन । सञ्चारकर्मी र अधिकारकर्मीको यो समन्वय एक दशक लामो सशस्त्र द्वन्द्वको समाप्ति पछि पनि कायमै रह्यो । यी दुई निकायका साझा धारणाले शान्ति, सुरक्षा, मानवअधिकारको संरक्षणमा महत्वपूर्ण भूमिका खेल्यो ।

शान्ति सुरक्षामा भएको सुदृढीकरणसंगै राजधानी र मोफसल सबैतीर संख्यात्मक रुपमा मिडियाको बाढी सुरु भयो । दोस्रो जनआन्दोलनको सफलतासंगै सुरु भएको यो क्रम यद्यपि जारी छ। देशका अन्य शहर झै यो अवस्थाबाट नेपालगन्ज पनि अछुतो रहन सकेन । यो सहरमा पनि दैनिक, साप्ताहिक अखवारसंगै एफएम रेडियोको पनि बाढी नै आयो । संख्याको त्यो भीड केही बर्षामा उर्लने खहरे झै सुसाएर आए सुस्ताएर गए। केही मौसमी रुपमा चाडपर्व कुरेर बस्नेहरु छन् । केही जिनतिन रुपरंग विगारेर कष्टपूर्ण रुपमा निरन्तरता दिइरहेका छन् ।

व्यवसायिकतालाई धान्दै अगाडि बढेको नेपालगन्जको सिमित अखवारमध्ये दैनिक नेपालगन्जले आफूलाई छोटो समयमा अग्रणी भूमिकामा राख्न सफल भएको छ । यस पत्रिकाको सामाजिक संघसंस्था र अधिकारकर्मीसँगको सहकार्य र समन्वय अनुपम रहदै आएको छ ।

यसैबीच, सफल मान्छेहरु फरक काम गर्दैनन् फरक तरिकाले गर्छन भन्ने भनाइलाई चरितार्थ गर्दै दैनिक नेपालगञ्जले आफ्नो पुनः प्रकाशनको २ वर्ष पूरा गरेको छ । त्यसोत पत्रकारितामा निरन्तरता मात्र ठूलो उपलब्धी हैन । कति वर्ष चल्यो भन्दा पनि कसरी चल्यो भन्ने प्रश्न व्यवसायिक पत्रकारितामा अहम् हुन्छ । यस अवधिमा आएका कतिपय पत्रिका विलाए, कति उदाए र अस्ताए । कतिपय रुपरंग विगारेर गुणस्तरसँग सम्झौता गर्दै जसोतसो टिक्दै रहे तर दैनिक नेपालगन्जले समाचार देखि साजसज्जासम्ममा आफ्नो गुणस्तरमा हालसम्म सम्झौता गरेन ।

नेपालगन्ज सहरको लोकप्रिय अखवार हुनुको नाता मात्र हैन पत्रकारितालाई पेशा बनाएका श्रमजिवी पत्रकारको नेतृत्व पाउनुको नाताले पनि दैनिक नेपालगन्जले आफूलाई अरुभन्दा फरक बनाउन सक्षम भयो। सक्षमताको मापदण्ड उमेर र वर्षलाई नमान्ने हो भने प्रकाशनको छोटो अवधिमा दैनिक नेपालगन्जले कमाएको विश्वसनियता र पाठक उसको खुबी हो । यति भन्दैमा दैनिक नेपालगन्जले पात्तिने अवस्था छैन । सञ्चार क्षेत्रमा बढेको अस्वस्थ प्रतिस्पर्धा यस दैनिकको पनि चुनौती हो। स्वतन्त्रता र निष्पक्षताको कसीमा यसले सधैं अग्निपरीक्षा दिइरहनु पर्नेछ । व्यक्ति राजनीतिक हुन सक्छ, पत्रकार विचारले निर्देशित हुनसक्छ तर पत्रिका राजनीतिक र समाचार विचारले निर्देशित हुनुहुन्न । आजको यो बहुलवादी समाजमा निष्पक्षता पत्रकारिताको सबैभन्दा ठूलो चुनौती हो । त्यस्तै, समाचारको भाषा, शैली, प्रस्तुती लगायतका कतिपय विषयवस्तुमा थप सुधारको आवश्यकता छ ।

गुणस्तरीय समाचारका लागि गुणस्तरीय संवाददाता आवश्यक हुन्छ र त्यसका लागि तालिम, प्रशिक्षण आदिको जरुरी हुन्छ भन्ने सत्यलाई पनि प्रकाशकले विर्सनु हुन्न । आफ्ना समाचारदाता माथिको लगानी पत्रिका माथिको लगानी हो। लगानी विनाको प्रतिफल दीगो हुन्न। सहकार्य र समन्वयको नाममा गर्नुभयो र भन्नुभयो भन्ने पत्रकारिता त्यागेर त्यो भन्दा माथि उक्लदै, विगतबाट सिक्दै भविष्यका योजना बनाउन सक्नुपर्छ। भएका पाठकलाई टिकाएर नयाँ पाठकको खोजी गर्नु त्यति सहज छैन । सफलताको लागि स्थिर हैन चलायमान हुनुपर्छ। उच्च प्रतिस्पर्धाको यो युगमा विज्ञापनदातासँग पनि विकल्प प्रसस्त छन भन्ने यथार्थ भुल्नु हुन्न। त्यसोत मोफसलको पत्रकारिता लेख लेखेजस्तो सहज पक्कै छैन तर दैनिक नेपालगन्जमा पक्कै पनि चुनौतीसँग जुध्ने अदम्य साहस र आत्मविश्वास छ । त्यही आत्मविश्वास ले नै यस पत्रिकालाई यहाँसम्म ल्याइपुर्‍याएको हो। आशा छ, यस दैनिकका ठूला सफलताका कथाहरु लेख्ने समय आउन बाँकी नै छ। आगामी दिनमा यस दैनिकले आफूलाई अझ परिस्कृत गरेर आफ्नो कर्तव्यपथमा अगाडि बढन सकोस् सामाजिक न्यायका अभियानकर्ताहरु सँगको सहकार्य अझ मजबुत बनोस्। सफलता र प्रगतिको शुभकामना। *(अधिकारकर्मीसमेत रहेका अधिवक्ता बस्नेत हाल उच्च शिक्षा अध्ययनमा अमेरिका छन् )*

basnetbkb@gmail.com

# साहित्यिक विकासमा पत्रिकाको योगदान



- हरिप्रसाद तिमिल्सिना

***पृष्ठभूमि***

नेपालमा समाचार मूलक (अखबारी) पत्रकारिता १९५८ मा 'गोरखा पत्र' को प्रकाशन सँगै प्रारम्भ भएको हो। साहित्यिक पत्रकारिता भने नेपालको जेठो पत्रकारिताका रुपमा १९४३ मा मोतीराम भट्टको सक्रियतामा सुधा सागर (१९४३) बाट भएको 'गोर्खा हास्य मञ्जरी' मा प्रकाशित विज्ञापनबाट स्पष्ट हुन्छ। अखवारी पत्रकारिता भन्दा १५ वर्ष जेठो भएर पनि अखवारी पत्रकारिता जत्ति फस्टाउन सकेको छैन्। समाचार मूलक पत्र पत्रिकाहरूमा समसामयिक सूचना, सन्देश एवं नवीनतम घटनाहरू रहने भएकाले पाठकहरूले खरिद गर्ने तर साहित्यिक पत्र पत्रिकाका पाठक साहित्यकार र साहित्यप्रति रुचि भएका व्यक्तिहरू मात्र हुने भएकाले पाठक न्यून हुँदा विक्री नहुने समस्या अझ पत्र पत्रिका किनेर पढ्ने बानीको विकास हुन नसकेकाले र आम नागरिकहरूले साहित्यलाई जीवनका विविध आयामको अभिव्यक्ति हुने विधाका रुपमा चिन्न नसकेकाले पनि फस्टाउन सकेको छैन। साथै आर्थिक अभावले प्रकाशनको निरन्तरता नभई साहित्यिक पत्र पत्रिका मर्कामा परेको हो।

यति भएर पनि साहित्यिक पत्रकारितालई अखवारी पत्रकारिताले जेठो भएर मात्र होइन, त्यसको आवश्यकता र महत्वलाई बुझेर अत्यन्त माया दिएर आफू सँगै अगाडि लगि रहेको छ। गोरखापत्र प्रकाशन प्रारम्भ गरे देखि नै साहित्यिक विषयवस्तुहरूलाई नियमित प्रकाशन गर्न लेखक कविहरूलाई स्थान दिने, साहित्य समीक्षा, अन्तर्वाता आदिको प्रकाशन गर्दै मलजल र संरक्षण गरेको र हाल सम्म शनिवारीय अङ्कका रुपमा साहित्यका विविध विषयहरूलाई नियमित पस्कि रहेको छ। यस परम्परालाई त्यस पछिका अन्य दैनिक, साप्ताहिक, पाक्षिक, मासिक पत्रपत्रिकाहरूले आफ्नो दायित्व र पाठकहरूका रुचिका विविध विषय मध्ये महत्त्वपूर्ण विषयका रुपमा प्रकाशन गर्दै आएका छन्।

***२. बाँकेका समाचारमूलक पत्रपत्रिकाको सर्वेक्षण***

काठमाडौँबाट प्रकाशित हुने ठुला मिडिया मात्र होइन मेचीदेखि महाकालीसम्मका सबै मोफसलका पत्रपत्रिकाहरूले साहित्यलाई महत्त्व दिएर नियमित प्रकाशन गरि रहेको पाइन्छ। मध्यपश्चिम र सुदूर पश्चिमको प्रमुख आर्थिक, व्यापरिक एवं औद्योगिक सहर नेपालगन्ज शिक्षा, साहित्य र सूचना सञ्चारको केन्द्र पनि हो।

दिवङ्गत महावीर गुप्ताले २०११ सालमा हिन्दी भाषामा साप्ताहिक नयाँ सन्देश पत्रिका प्रकाशन गरे पछि नेपालगन्जको अखबारी पत्रकारिताको इतिहास प्रारम्भ भएको हो। तत्पश्चात मातृभूमि (२०१७), राष्टि्य आह्वान साप्ताहिक, भेरी सन्देश पाक्षिक (२०२५), पन्नलाल गुप्तको किरण साप्ताहिक (२०३६), पूर्णलाल चुकेको जनमत अर्ध साप्ताहिक, सुरमा सरोवर साप्ताहिक (२०३४), २०४७ मा नाम परिवर्तन गरी चौतारी रहेको र २०४८ मा बन्द भएको पाइन्छ। लियाकत अलीको सङ्कल्प साप्ताहिक (२०३६), जित बहादुर बिसीको 'पर्यवेक्षक '(२०४०), प्रेम कैदीको मालिका परमानन्द मिश्रको प्रकाश (२०३९) प्रकाशित भएको पाइन्छ। २०४० को दशकमा पन्नालाल गुप्तको जय नेपाल, प्रभात भण्डारीको नेसनल टाइम्स, राजेन्द्र सिंह राठौरको निर्भिक साप्ताहिक, प्रेम कैदीको युगधारा, राधेश्याम शर्माको आदर्श मञ्च पाक्षिक, गोपाल बहादुर सिंहको भेरी सन्देश मणिलाल गुप्तको लोकमत र राम गोपाल वैश्यको शङ्खनाद प्रकाशित भएको पाइन्छ।

२०४७ सालमा प्रजातन्त्रको स्थापना पश्चात पत्रपत्रिका फस्टाउने वातावरण बन्यो। लोकतान्त्रिक संविधानमा सूचना सञ्चार सम्बन्धी स्पष्ट व्यवस्था र त्यस

*यसरी समाचारमूलक पत्रकारिता गर्ने पत्रकार मित्रहरूले साहित्यमा कलम चलाउनेहरूलाई गरेको लेखकीय प्रेम र धर्मबाट साहित्यिक पत्रकारिता, भाषा र साहित्यलाई संरक्षण संवर्द्धन गर्न महत्त्वपूर्ण योगदान पुगेको छ। अन्यथा आफ्नै खर्चमा यदाकदा १/२ वटा कृति प्रकाशन गर्न सक्ने स्थानीय लेखक साहित्यकारहरू ओझेल पर्दै जाने अवस्था देखिन्छ। समाज परि वर्तनका संवाहक पत्रकार र समाज परिवर्तनका लागि लेख्ने लेखक साहित्यकार दुबैको मूल ध्येय एउटै भएर पनि होला समाचारमूलक पत्रकारिताबाट साहित्यले न्यानो पाएको। यो न्यानो पुसमाघको कठाङ्ग्रिने जाडो र ग्रीष्मको झ्झती पोल्ने तातोमा पनि सौहार्दपूर्ण बनिरहोस्।*

अनुसार ऐन नियम बने पछि देशभर जस्तै नेपालगन्जमा पनि पत्रपत्रिका प्रकाशनमा तीव्रता आयो । माधवकुमार शाहको 'नयाँ नेपाल टाइम्स', महेन्द्र राज शर्माको 'विचार' शिवलाल पाण्डेको 'हाल खवर', उदय श्रेष्ठको 'निष्पक्ष ध्वनि' र पश्चिमाञ्चल, रोमहर्ष धितालको 'विकल्प' सुशीला चुकेको 'दैनिक गतिविधि', वासुदेव श्रेष्ठको 'उज्यालो', महेन्द्र राज शर्माको 'हलचल' (२०५२) मध्ये 'उज्यालो' र 'निष्पक्ष ध्वनि' बाहेक अन्य पत्रिकाहरु केही समय प्रकाशित भई बन्द भए । विधुप्रकाश कायस्थ सम्पादक रहेको दैनिक नेपालगन्ज (२०५५) (हाल झलक गैरेद्वारा पुनर्पकाशित), मो. हारुनको 'नशेमन' अजय गुप्तको 'आजको सामना' रहिस अहमदको 'समय अधिकार' लोकनाथ बर्माको 'ग्रामदीप', मध्ये 'आजको सामना', 'समय अधिकार', निष्पक्ष ध्वनि, चन्द्रशेखर पाण्डेको न्यू मधेस एक्सप्रेस र उज्यालो बाहेक अन्य बन्द रहेको देखिन्छ ।

२०५६ सालमा शिव डोटेलको नेपालगन्ज एक्सप्रेस, चन्द्रेश्वर त्रिपाठीको समाज जागरण (२०५६), २०६० मा प्रकाशित टुडे नेपाल (२०६१ मा बन्द), हेमन्त कर्माचार्यको 'कालपृष्ठ', शरद के.सी.को 'बागेश्वरी टाइम्स' (२०५७ मा प्रकाशित २०५८ मा बन्द) करुणा थापाको 'नयाँ संरचना' (२०५९ पछि चक्रपाणी लम्सालको सम्पादक भई हाल बन्द), करुणा थापा र गोपी बुढाको 'हाम्रो संरचना' (केही समय पछि बन्द), अशोक विष्टको 'हाम्रो चुनौती' (२०६२ केही समय प्रकाशित), अक्षरी पोखरेलको 'महिला सञ्चार' (२०६२), मेघ राज ओलीको मध्यपश्चिम सन्देश, पहिले दुर्गा रोकाय र पछि रुद्र सुवेदीद्वारा सञ्चालित लक्ष्मीनारायण शाहको मध्यपश्चिम, सम थापाका सत्यपत्र, जयनारायण शाहको 'नेपालगन्ज टाइम्स', शङ्कर खनाल, जनक नेपाल र तुला अधिकारीको 'अर्थ खबर', यमबहादुर रावतको 'कोहलपुर' थारु भाषाको 'फुलवार', नेकपा माओवादीको 'जनसन्देश' मध्ये हेमन्त कर्माचार्यको 'कालपृष्ठ' अक्षरी पोखरेलको 'महिला सञ्चार' र मेघ राज ओलीको 'मध्यपश्चिम सन्देश' मात्र प्रकाशित भइ रहेका छन् । पछिल्लो समयमा भेषराज बस्नेतको 'हाम्रो समाचार' दामोदर भण्डारीको 'सद्भाव', झलक गैरेको नेतृत्वमा सम्यक मिडियाबाट 'दैनिक नेपालगन्ज' २०६८ भाद्र १९ गते देखि पुनः प्रारम्भ भई नियमित प्रकाशित भइ रहेको छ। हाल सुशिल शर्माको नयाँ कोर्स, वीरेन्द्र पुनको पावरलाइन, र गोविन्द शर्माको लोकप्रिय सन्देश भर्खरै प्रारम्भ भएका छन् ।

नेपालगन्जबाट प्रकाशित समाचारमूलक पत्रपत्रिकाहरू मध्ये दैनिक नेपालगन्ज, कालपृष्ठ, सदभाव, हाम्रो समाचार, जनमत आदि नियमित प्रकाशित पत्रिकाहरू हुन् ।

### ***३. भाषा साहित्यको विकासमा समाचारमूलक पत्र पत्रिकाको योगदान***

साहित्यिक विविध विषयवस्तुका लागि दैनिक अखवारहरूले सङ्कट काल पूर्व भित्री चार पृष्ठ छुट्टै प्रकाशन गर्ने गरेकोमा यताका दिनमा जम्मा चार पृष्ठ मात्र प्रकाशित गरिरहेका छन् । यी नियमित अखवारहरुले सप्ताहमा एक दिन साहित्यिक अङ्कका रुपमा विशेष महत्त्वका साथ स्थानीय साहित्यकारहरूलाई र उनका रचनाहरूलाई स्थान दिने गरेको पाइन्छ । दैनिक नेपालगन्जले प्रत्येक आइतबार, सदभावले शुक्रबार, कालपृष्ठ र हाम्रो समाचारले शनिबारका अङ्कलाई साहित्यिक अङ्कका रुपमा भित्री दुई पृष्ठ दिने गरेको पाइन्छ । जनमत अर्धसाप्ताहिकले प्रत्येक अङ्कमा कुनै न कुनै रूपमा साहित्यिक सामग्री राखी प्रकाशन गर्ने गरेको छ भने नागरिक पश्चिमेलीले पनि शनिबार साहित्यलाई स्थान दिने गरेको छ ।

जसरी गोरखापत्रले तत्कालीन नेपाली भाषा साहित्यको विकासमा योगदान दियो, नेपालगन्जका यी पत्रिकाहरूले त्यसै गरी स्थानीय स्रष्टा, साहित्य, कला, संस्कृतिलाई जगेर्ना गर्ने र जन समक्ष ल्याउँदै भाषा साहित्यिक विकास र उन्नयनमा विशिष्ट योगदान पुऱ्याइ रहेका छन् । जनमतका सम्पादक पूर्णलाल चुके 'उषालाई पत्र' कविता सङ्ग्रहका स्रष्टा कवि हुन् भने दैनिक नेपालगन्जका प्रधान सम्पादक झलक गैरे नव प्रतिभा प्रवर्द्धन समूह हुँदै हाल भेरी साहित्य समाज केन्द्रीय समितिमा रहेर साहित्यिक योगदान पुऱ्याइरहेका छन्। अन्य सम्बद्ध सम्पादक पत्रकारहरू पनि साहित्य प्रति रुचि राख्ने भएकाले पनि स्थानीय पत्रकारहरू र पत्र पत्रिकाहरु साहित्यका नजिक छन् ।

स्थानीय रूपमा प्रकाशित यी अखबारहरूमा प्रकाशित साहित्यिक सामग्रीहरू हेर्दा, गजल, मुक्तक, कविता, भावना, कथा, लेख निबन्ध, साहित्यिक समाचार, अन्तरवार्ता, पुस्तक चर्चा, साहित्य समीक्षा आदि प्रकाशित हुने गरेका छन् । यिनै सामग्रीहरूबाट परिचित प्रेरित हुँदै नव प्रतिभाहरू उठ्ने र स्थापित प्रतिभाहरूले प्रतिभाको परिष्कार र प्रतिष्ठा प्रवर्द्धन गर्ने काम गरका छन् । यसरी समाचारमूलक पत्रकारिता गर्ने पत्रकार मित्रहरूले साहित्यमा कलम चलाउनेहरूलाई गरेको लेखकीय प्रेम र धर्मबाट साहित्यिक पत्रकारिता, भाषा र साहित्यलाई संरक्षण संवर्द्धन गर्न महत्त्वपूर्ण योगदान पुगेको छ। अन्यथा आफ्नै खर्चमा यदाकदा १/२ वटा कृति प्रकाशन गर्न सक्ने स्थानीय लेखक साहित्यकारहरू ओझेल पर्दै जाने अवस्था देखिन्छ। समाज परिवर्तनका संवाहक पत्रकार र समाज परिवर्तनका लागि लेख्ने लेखक साहित्यकार दुबैको मूल ध्येय एउटै भएर पनि होला समाचारमूलक पत्रकारिताबाट साहित्यले न्यानो पाएको । यो न्यानो पुसमाघको कठाङ्ग्रिने जाडो र ग्रीष्मको भत्भती पोल्ने तातोमा पनि सौहार्दपूर्ण बनिरहोस्। दैनिक नेपालगन्जको १६ औं वार्षिकोत्सव र सम्यक मिडियाको तेस्रो वर्ष प्रवेशको सुखद् अवसरमा शुभकामना सहित :

*बाल है पत्रिकाबाटै परिवर्तनको दियो ।*
*चौथो अङ्ग बनोस् नित्य सत्य औ न्यायको मियो ।*
*पलाओस् हरियो बन्दै तेस्रो वार्षिकको पल ।*
*नव चेतनले जागुन् कन्दरा बनी झल्मल ।*

***( तिमिल्सिना भेरी साहित्य समाज, नेपालगन्जका अध्यक्ष हुन् ।)***

**कानुन र समाज**

# रोकिएला बालविवाह ?



● **लोक बहादुर शाह**

*सानो उमेरका बालिकाहरु स्वास्थ्य र मानसिक रुपमा समेत गर्भवती बन्न सक्ने अवस्थाका हुँदैनन् । सानै उमेरमा बालिका गर्भवती भएमा आफू स्वस्थ रहन र बच्चा समेत स्वस्थ रुपमा जन्माउन नसक्ने भई गर्भवती आमा तथा बच्चाको समेत अकालमा नै मृत्यू हुन सक्छ । परम्परा, धर्म, संस्कृति आदिका नाउँमा सानै उमेरमा विवाह गर्दा गराउदा आफ्नै बालिकाको अकालमा नै मृत्यू हुन सक्ने र सम्मानपूर्वक बाँच्न पाउने हकबाट नै वन्चित हुनु पर्ने यथार्थतालाई हाम्रो समाजले नजरअन्दाज गर्ने गरेको देखिन्छ । सानै उमेरमा केटाकेटीको विवाह गरी गराई दिँदा पढ्न पाउने, खेल्न पाउने, बालस्वतन्त्रताको उपभोग गर्न पाउने लगायतका बाल अधिकार र मानवअधिकार बाट वन्चित हुने गरेको पाइन्छ ।*

विवाह केटाकेटी वीचको बैधानिक सम्झौता हो । विवाहले केटा केटी वीचको सम्वन्धका साथसाथै गाउँ, समाज, भाषा, क्षेत्र, राष्ट्रिय तथा अन्तर्राष्ट्रिय सम्वन्धलाई समेत जोडेको हुन्छ। वैवाहिक जीवन सुखद् रहेमा घरपरिवार देखि शुभचिन्तक सवै खुशी र सुखी हुन्छन् तर कसैको सम्वन्ध कुनै कारणले असफल भएमा घरपरिवार, आफन्त देखि समाजमा समेत यसको प्रतिकूल असर पर्दछ। बैबाहिक जीवन असफल भएका कारण हत्या, आत्महत्या, यातना जस्ता क्रुर र अमानवीय घटनाहरु पनि घट्ने गरेको पाइन्छ ।



हाम्रा समाजमा विशेष गरी तराइ मूलका समुदायमा वालविवाह अझै कायम छ। बाँके जिल्लामा ३६ हजारले बालविवाह गरेको एक प्रतिवेदन छ। बालविवाह गर्नु गराउनु बाल अधिकार, महिला अधिकार, मानव अधिकार र कानूनी शासनको समेत प्रतिकूल हो । बालविवाहबाट बालबालिका पढ्न पाउने, स्वेच्छिक रुपमा विवाह गर्न पाउने र सम्मानपूर्वक बाँच्न पाउने हकबाट वन्चित हुन्छन् ।

प्रेम विवाह र अन्तरजातीय विवाहलाई अहिले पनि हाम्रो समाजले सहर्ष स्वीकार गर्न सकिरहेको देखिदैन । छोराछोरी ठूला भएपछि आफूखुशी विवाह गर्नसक्छन्, आफूले भनेको र वचन दिएको ठाउँबाट विवाह नगर्न सक्छन् भन्ने डर, त्रास, भयका कारण पनि बाबुआमाले आफूले रोजेको र वचन दिएको केटाकेटीसँग सानै उमेरमा विवाह गराईदिने गरेको देखिन्छ। बालिका रजश्वला हुनभन्दा पूर्व नै विवाह गर्दा धार्मिक एवं सामाजिक दृष्टिकोण बाट उपयुक्त हुन्छ भन्ने अन्धविश्वास र परम्पराका कारण पनि बालविवाह हुने गरेको पाइन्छ। बेरोजगारी, आर्थिक अभाव र धेरै सन्तान भएका कारण बाध्यताले पनि वालविवाह जस्ता गैरकानूनी कार्यले प्रश्रय पाइरहेको छ। वालविवाहबाट वैवाहिक जीवनमा पर्न सक्ने असर, बालिकाको प्रजनन स्वास्थ्यमा पर्नसक्ने गम्भीर खतरा, बालअधिकार, कानूनी बन्देजहरुको बारेमा राम्ररी जानकारी नपाएका कारण पनि बालविवाहले निरन्तरता पाएको हो । बालविवाहलाई हाम्रो समाजले सहर्ष स्वीकार गरेको र बालविवाहको बारेमा सकभर कसैले उजुरी नै नगर्ने र कसैले कुनै कारणले उजुरी गरेकै खण्डमा पनि यो सामाजिक, रीतिरिवाज, धार्मिक एवं सास्कृतिक प्रचलन हो भन्दै प्रहरी प्रशासनले समेत वालविवाहलाई सामाजिक मान्यता मिलापत्र गराई दिने गरेको छ। यि विविध कारणहरुले गर्दा अहिले सम्म पनि बालविवाह रोकिएको छैन ।

अभिभावकको मन्जुरीले केटा र केटीको उमेर १८ वर्ष पूरा भएको हुनु पर्ने र प्रेम विवाहको लागि केटा केटी दुवैको उमेर २० वर्ष पुगेको हुनु पर्ने नेपालको कानून छ । विवाह गर्दा गराउँदा ढाँटेर, झुक्याएर, गफलतमा पारेर र केटा केटीको इच्छा एवं सहमति विपरित विवाहगर्न गराउन समेत हुँदैन। कानूनी उमेर पूरा नभएको अवस्थामा वा झुक्याएर वा केटा केटीको इच्छा विपरित जात, धर्म, परम्परा आदिका नाउमा विवाह गरे गराएका खण्डमा विवाह बदर हुने र त्यसरी विवाह गर्ने गराउनेलाई उमेर अवस्था

हेरी ६ महिला देखि ३ वर्षसम्म कैद र जरिवाना समेतको सजायको व्यवस्था कानूनमा छ ।

बालबालिका सम्वन्धी ऐनले १६ वर्ष उमेर नपुगेकालाई बालबालिका मानेको छ । कसैले विवाहको नाममा वा अन्य अवस्थामा १६ वर्षभन्दा कम उमेरकी बालिकालाई उनको मन्जुरी लिई वा नलिई करणी गरेमा जबर्जस्ती करणीको गम्भीर अपराध हुने उमेरको अवस्था हेरी १० देखि १५ वर्षसम्म कैद सजाय हुनसक्ने कानूनी व्यवस्था रहेको छ ।

बालविवाह कानूनी रुपमा अपराध हो । कानूनले नै निषेध गरेको कुरा गर्ने गराउने अधिकार कोही कसैलाई हुँदैन । प्रहरी प्रशासन एवं समाजको अगाडि नै खुलेआम बालविवाह भइरहेका छन् तर त्यस प्रकारका गैरकानूनी कार्यलाई रोक्ने र बालविवाह गर्ने गराउने अभिभावक समेतलाई कानूनको दायरामा ल्याउन सकिएको छैन । जस्का कारण कानूनको शासनको ठाडै उपहास भइरहेको देखिन्छ ।

सानो उमेरका बालिकाहरु स्वास्थ्य र मानसिक रुपमा समेत गर्भवती बन्न सक्ने अवस्थाका हुँदैनन् । सानै उमेरमा बालिका गर्भवती भएमा आफू स्वस्थ रहन र बच्चा समेत स्वस्थ रुपमा जन्माउन नसक्ने भई गर्भवती आमा तथा बच्चाको समेत अकालमा नै मृत्यू हुन सक्छ । परम्परा, धर्म, संस्कृति आदिका नाउँमा सानै उमेरमा विवाह गर्दा गराउदा आफ्नै बालिकाको अकालमा नै मृत्यू हुन सक्ने र सम्मानपूर्वक बाँच्न पाउने हकबाट नै वन्चित हुनु पर्ने यथार्थतालाई हाम्रो समाजले नजरअन्दाज गर्ने गरेको देखिन्छ । सानै उमेरमा केटाकेटीको विवाह गरी गराई दिँदा पढ्न पाउने, खेल्न पाउने, बालस्वतन्त्रताको उपभोग गर्न पाउने लगायतका बाल अधिकार र मानवअधिकारबाट वन्चित हुने गरेको पाइन्छ । बालविवाह भइसकेपछि घरको काम बाहेक अरु सवै स्वतन्त्रता र अवसरहरु बाट वन्चित हुनु पर्दछ । विवाहिता महिलाले घर बाहिर जानु हुँदैन भन्ने बन्द संस्कृति हाम्रो समाजमा कायम नै छ ।

बालविवाह गर्ने गराउनेलाई अहिले भएको सजायको व्यवस्था कम भएकोले बालबालिकाको भविष्य र घट्न सक्ने गम्भीर घटनालाई मध्यनजर राखी बालविवाह गराउनेलाई सजाय बढाउनु पर्दछ । केटा, केटापक्षका परिवार वा कोही कसैको कारणले महिलाले आत्महत्या गरेको अवस्थामा आत्महत्याको लागि बाध्य पार्ने आत्महत्याका कारणीलाई समेत सजायको व्यवस्था गरिनु पर्दछ । बालविवाह सामाजिक रोग हो । यस प्रकारको गैरकानूनी कार्यलाई रोक्न सवैको सहयोग आवश्यक छ । बालविवाहलाई रोक्न सबैभन्दा ठूलो भूमिका सञ्चार माध्ययमको हुन सक्छ ।

सामाजिक चेतना जगाउने, कानूनी व्यवस्था र बाल अधिकारको बारेमा जानकारी दिन सञ्चार माध्यमले महत्वपूर्ण भूमिका निर्वाह गर्न सक्छन् । बालविवाह रोकथाम भएमा दुवैको भविष्य उज्जवल हुने, बालअधिकार र मानव अधिकारको संरक्षण हुने, समाजमा शान्ति सुव्यवस्था कायम गर्न मद्दत पुग्ने, स्वेच्छिक रुपमा मन परेका केटाकेटीसंग विवाह गरी बैबाहिक जीवन सफल पार्न सक्ने र कानूनको शासनको पनि सम्मान हुने भएकोले बालविवाहको अन्त्य गरि बालबालिकाको सुनौलो भविष्य सुरक्षित पार्न आवश्यक छ ।

*(अधिवक्ता शाह दैनिक नेपालगन्जका नियमित स्तम्भकार हुन् ।)*

# आफन्तबाटै असुरक्षित

-वसन्त गौतम



महिला माथि हुने यौनजन्य हिंसा महिला अधिकार उल्लघंनको चरम रुप हो । त्यसमा पनि वालिकामाथि हुने यौनजन्य हिंसाका घटना त झनै गम्भीर फौजदारी अपराध हो । बिगत सशस्त्र द्वन्द्वकालका पनि निर्दोष वालिकाहरु बिभिन्न बहानामा द्वन्द्वरत पक्षबाट यौनजन्य हिंसाको शिकार भएका थिए । पीडित भएकालाई न्याय त के अन्तरिम राहत र स्वास्थ्य उपचारको समेत ब्यवस्था हुन सकेको छैन । न उनीहरु खुलेर आफ्नो पीडा भन्न सक्दछन् न सरकारले नै त्यस्तो वातावरणको सृजना गरिदिएको छ । यस्तो गम्भीर अपराधमा संलग्न पीडकहरु कानूनको दायरामा नआउनाले यौनजन्य हिंसा बढिरहेको छ ।

गत जेष्ठमा बाँके जिल्लाको सुनगाभा सामुदायिक वन क्षेत्रमा १३ बर्षिया बालिका बलात्कृत भइन् । घरायसी सामान किनेर घर फर्कदै गर्दा उनी  नातापाता भित्रैका ब्यक्तिबाट पीडित बनेको तथ्य सार्वजनिक भयो । एकान्तमा ढुकेर बसेका २० बर्षिय एक युवकले आफ्नो यौन प्यान मेटाउन एकदमै निकृष्ट रुपमा अप्राकृतिक मैथुन गरेको पीडित पक्षको आरोप छ । बाँकेमै घटेको अर्को घटना झनै दर्दनाक छ । ६ र ८ बर्षिय दुई दिदी बहिनीलाई ३६ बर्षिय एक युवाले जवरजस्ती करणी/अप्राकृति मैथुन गरेको घटना सार्वजनिक भएको छ । २०७० बैशाख महिनामा घटेको यो घटनाको अर्को उदेकलाग्दो पक्ष के छ भने केही राजनैतिक दलका नेताले यो घटनालाई राजनैतिक रंग दिने प्रयत्न गरे । आरोपीलाई कारवाही गराउने र गर्न नहुने बिचको बिवादले केही दिनसम्म घटनाले कानूनी रुप लिन सकेन ।

५ महिना अघि बाँकेको ग्रामिण भेगकी ९ बर्षिया बालिका घरमा एक्लै भएको बेला छिमेकी युवाबाटै बलात्कारको शिकार भइन् । घटना यति निकृष्ट थियो कि पीडकको जवरजस्तीपनले वालिकाको संबेदनसिल अंगनै क्षत बिक्षत हुन पुग्यो । बाँके जिल्लामै असारको अन्तिम साता भएको भनिएको घटना झनै चिन्ताजनक छ । दुई बर्षिय एक वालिकालाई १४ बर्षे बालकले जवरजस्ती बलत्कार गरेको भनी पीडित परिवारले वालक बिरुद्ध प्रहरीमा उजुरी दायर गरेका छन् । शिक्षा दिक्षा र ज्ञान आर्जन गर्ने उमेरमा गरेको भनिएको गम्भीर आपराधिक कार्यले हाम्रा बालबालिका कुन पथमा अगाडी बढ्दै छन् ? उनीहरुको बालमनोबृत्ति कता जादै छ ? सोचनीय बिषय भएको छ ।

पछिल्लो समय बालिका उपरको यौन हिंसाका घटनाहरु बढिरहेका माथिको उदाहरणले देखाउछन् । कलिलै उमेरका नानीहरु आफ्नै घर परिवार र समाजबाटै असुरक्षित बन्दै गएका छन् । घटना प्रकृतिले बृद्ध, युवा देखि वालकसम्मका ब्यक्तिहरु यस्तो अनैतिक कार्यमा संलग्न हुनुले समाजमा नैतिकताको खडेरी पर्दै जानुको साथै आफ्नै घरपरिवार र छिमेकी र कम उमेर वालकसंग

*एकान्तमा ढुकेर बसेका २० बर्षिय एक युवकले आफ्नो यौन प्यान मेटाउन एकदमै निकृष्ट रुपमा अप्राकृतिक मैथुन गरेको पीडित पक्षको आरोप छ । बाँकेमै घटेको अर्को घटना झनै दर्दनाक छ । ६ र ८ बर्षिय दुई दिदी बहिनीलाई ३६ बर्षिय एक युवाले जवरजस्ती करणी/अप्राकृति मैथुन गरेको घटना सार्वजनिक भएको छ ।*



समेत सशंकित हुनु पर्ने अवस्था आएको छ । के आधारमा कसैलाई माथी बिश्वास गर्ने ? भन्ने प्रश्न उठ्ने गरेको छ । यस्ता घटनाले हरेक वालिकालाई आफ्नै नातागोता र इष्टमित्रसंग पनि हरपल होसियारी र सचेत रहनु पर्छ भन्ने पाठ सिकाएको छ ।

सामाजिक परिवेश, इज्जत र शक्तिका नाममा कतिपय बालिकामाथि भएका यौनजन्य हिंसाका घटनाहरु बाहिर आउनै पाएका हुँदैनन् । उल्लेखित घटनाका कारण बालिकाहरुले घरदेखि विद्यालय र हरेक पेशा व्यवसाय एवं स्थानमा असुरक्षित महसुस गरिरहनु परेको छ । प्रायशः जबर्जस्ती करणी, यौनजन्य दुर्व्यवहार, अप्राकृतिक मैथुन, मानव वेचविखन, अपहरण, यौन शोषण, वेश्यावृति, बाल श्रमिक, घरेलु कामदार, बाल विवाह, घरेलु हिंसा, प्रेमजाल आदिका कारण बालिकाहरु बढी मात्रामा यौनजन्य हिंसामा पर्ने गरेका छन् ।

नेपालको अन्तरिम संविधान, २०६३, बालअधिकार सम्बन्धि राष्ट्रिय, अन्तर्राष्ट्रिय कानूनले वालिकालाई हरेक प्रकारको हिंसाबाट संरक्षण गरि उनीहरुको बिकास, सहभागिता र समानताको अधिकारलाई सुनिश्चित गरेको छ । तर वालिकाहरु उपर बढ्दो यौनजन्य अपराधका घटनाले ति कानूनहरुको व्यवहारिक कार्यान्वयन हुन नसकेको तथ्यलाई स्थापित गरेको छ ।

मानव बेचबिखन तथा ओसार पसार, बलात्कार, वैवाहिक बलात्कार, बिहावारी अन्तर्गतको (बहुविवाह, बाल विवाह), ज्यान सम्बन्धी (बलपूर्ण गर्भपतन समेत), सार्वजनिक अपराध सम्बन्धी मुद्धाहरु सरकारवादी हुने महिला हिंसा विरुद्धका मुद्दाहरु भएकोले जो सुकैले उजुरी गर्न सक्छ । सरकारी तवरवाटै यस्ता मुद्धाहरुको प्रभावकारी अनुसन्धान र कारवाही प्रक्रिया अगाडि बढाउन सक्ने कानूनी प्रावधान छ ।

तर यस्ता फौजदारी अपराधलाई पनि घरपरिवार, प्रहरी कार्यालयमै मिलाउन खोज्ने, पैसाको लेनदेनमा मुद्धा फिर्ता गराउन बाध्य पार्ने र अपराधको राजनैतिकरण गर्ने गलत प्रबृत्तिले पीडितहरु अन्याय सहन बाध्य छन् ।

महिला हिंसा अझ बालिकामाथि हुने यौनजन्य दुर्व्यवहारका घटना कम गर्न सञ्चार माध्यमले महत्वपूर्ण भूमिका खेल्न सक्छन् । अभिभावकलाई सचेत गराउने, कानूनी प्रावधानबारे जानकारी दिने, कुनै घटना भएका त्यस्ता घटनालाई प्राथकिमताका साथ सार्वजनिक गर्ने भूमिका सञ्चार माध्यमको हुन्छ । तर ध्यान राख्नुपर्ने कुरा पीडितबारेको व्यक्तिगत सूचना सार्वजनिक भएमा यसले पीडितलाई न्याय होइन झन ठूलो पीडा दिनेछ ।

*(अधिवक्ता गौतम दैनिक नेपालगन्जका नियमित स्तम्भकार र अधिकारकर्मी हुन् )*

# बाँके र बिकास



● विश्वराज डोटेल

बाँके जिल्लाको भौगोलिक अवस्थिति, प्राकृतिक श्रोतहरुको प्रचुरता, नदीनालाहरु, धार्मिक स्थलहरु जस्ता कुराहरु भएर पनि विकासको दृष्टिले अझ पनि पछाडि छ, जुन यस जिल्लाको लागि दुर्भाग्य देखिन्छ। हुन त विगत चार दशकमा यस जिल्लामा भौतिक पूर्वाधारको रुपमा पूर्व पश्चिम राजमार्ग र नेपालगन्ज-सुर्खेत राजमार्गको निर्माणले विकासको आधार खडा नगरेको होइन।

तापनि यी सडकहरु बनजंगल क्षेत्र भएर निमार्ण भएकोले पहाडबाट बसाई सराई गरी आउने र सुकुम्बासीको नाममा वनजंगल फडानी गरी नयाँ बस्ती बिस्तारको आधार बन्न पुग्यो। फलस्वरुप कुसुम क्षेत्र, कचनापुर क्षेत्र, महादेवपुरी क्षेत्र, कोहलपुर, रझेना, नौवस्ता तथा चिसापानीका घना जगंलहरु प्रायः समाप्त हुन पुग्यो। २०६७ सालमा यस जिल्लाको कोहलपुरदेखि कुसुमक्षेत्र सम्मको राजमार्ग उत्तरतर्फको क्षेत्रलाई समेटेर बाँके राष्ट्रिय निकुञ्ज घोषणा भएपछि बल्ल यस क्षेत्रको वनजंगल तथा जगंली जनावरहरुको संरक्षण र सम्बर्धनको ठोस आधार तयार भएको पाइन्छ।

बिकासका कुरा गर्दा भौतिक पूर्वाधारलाई प्राथमिकतामा राखिन्छ। खास गरेर पहाडबाट तथा देशका विभिन्न जिल्लाबाट बसाई सराई गरी आएका मुख्यतः पहाडी समुदाय बसोबास गर्ने क्षेत्रहरु अपेक्षाकृत व्यवस्थित र विकासपथमा अग्रसर हुँदै गरेको देख्न सकिन्छ। फराकिला र सफा बाटोहरु, मिलेका गाउँ बस्तीहरु, विद्यालय, उच्च मा.वि, क्याम्पससम्मको सञ्चालन, खानेपानी, विद्युत एवं आधारभूत स्वास्थ्यसेवाको उपलब्धताले यस जिल्लाको राधापुर, सीतापुर, बागेश्वरी, वनकटुवा, रझेना, नौवस्ता, कोहलपुर, चिसापानी, महादेवपुरी, कचनापुर लगायतका गा.वि.स.हरुलाई चेतनशील र जागरुक गा.वि.स.को सूचीमा राख्न सकिन्छ। विभिन्न भाषाभाषी, धर्म, सँस्कृतिको साझा फुलवारी बाँकेका ४६ गा.वि.स.हरु र १ न.पा.को विकासका सम्भावनाहरुको मोटामोटी विवेचना यसरी गर्न सकिन्छ।

> यस जिल्लाको ५० प्रतिशतभन्दा बढी कृषियोग्य भूमि सिँचाई गर्नसक्ने क्षमता रहेको पश्चिम राप्ती नदीमा निर्माणाधीन सिक्टा सिँचाई योजनाको हालसम्मको कामको गतिबाट सन्तोष लिन त सकिन्छ तर अबका दिनमा निर्माणमा आउने चुनौती सामना गर्ने अवस्थामा आयोजना रहेको पाइदैन। हालसम्म अगैया देखि निर्माण भएका नहर प्राय जगंलीक्षेत्रमा निर्माण भएको र बालापुर र ढकेरी क्षेत्रमा मात्र जग्गाको मुआब्जा वितरण गर्दा अहिलेसम्मको निर्माणमा खासै अवरोध देखिएन। तर अब नेपालगन्ज कोहरपुर राजमार्गको पूर्व र पश्चिमक्षेत्रमा निर्माण हुने नहरको लागि जग्गा प्राप्ति गर्न ठुलै महाभारतको सामना गर्नुपर्ने स्थिति छ।

(१) नेपालगन्ज २०१७ सालमा नगरपालिका घोषणा भएरपनि अहिलेसम्म न्यूनतम सहरी सुविधा नभएको एक अव्यवस्थित सहरको श्रेणीमा रहिरहेको छ। यो सहर अहिले बाहिरबाट बसाई सरी आउने मानिसको चाप थेग्न नसक्ने अवस्थामा पुगेको छ। सहरी पूर्वाधारहरु (सडक, ढल, विद्युत, खानेपानी, खुला चौर आदि) को विकास र व्यवस्थापन बिना जथाभावी बस्ती विकास भएको कारणपनि सुन्दर नगर बनाउने सपना नारा मै सिमित रहेको छ। यस नगरसँग सिमाना जोडिएका गा.वि.स.हरु पिप्रहवा, जयस्पुर, भवनियाँपुर, उदयपुर, परस्पुर, इन्द्रपुर, खासकारकादो, बसुदेवपुर र मनिकापुर समेत नौ गा.वि.स.लाई नेपालगन्ज नगरपालिकामा आवद्ध गरेर वृहद सहरी विकास कार्यक्रम तर्जुमा गर्न ढिलाई गरिनु हुन्न।

सहरी भू-उपयोग योजना बनाएर बस्ती क्षेत्र, व्यवसायिक क्षेत्र, शैक्षिक क्षेत्र, खेलमैदान, खुला पार्क, बस पार्क, कृषि क्षेत्र तथा फोहोर व्यवस्थापन सहितको सहरी सुविधाहरुको भरपर्दो आधार तयार गरी उप-महानगरपालिका स्तरमा परिणत गर्न सकिन्छ।

(२) ग्रामिण क्षेत्रहरुमा कृषि तथा पशुपालनको प्रचुर सम्भावना भएकोले ती क्षेत्रहरुमा व्यवसायिक कृषि विकासको माध्यमले कृषकहरुलाई कृषि पेशामा आकर्षित गर्ने कार्यक्रम ल्याइनु पर्दछ। हालको निर्वाहमुखी कृषिले राष्ट्रिय अर्थतन्त्रमा कुनै योगदान दिन सक्दैन। ५ किलो आलु र प्याज खरिद गर्न रुपैडिहा जाने मानसिकताले हाम्रो कृषिको अवस्था उदाङ्ग गरेको छ।




कृषि क्षेत्रमा सरकारले जतिसुकै लगानी बढाएको कुरा गरेपनि किसानले प्रत्यक्ष फाइदा पाएको अनुभूति नगरेसम्म उत्पादन र उत्पादकत्वमा वृद्धि सम्भव छैन । यसको लागि कृषकलाई मल, बीऊ, सिँचाई सुविधा, विद्युत सेवा, प्राविधिक सेवा, माटो जाँच परिक्षण जस्ता कुराहरुको भरपर्दो अवस्थाको सृजन गर्नैपर्दछ ।

(३) ग्रामीण क्षेत्रलाई उत्पादन क्षेत्र र बजार क्षेत्रलाई उपभोग क्षेत्रको रुपमा जोड्ने काम ग्रामिण पूर्वाधारहरुले नै गर्दछ। सडक यातायात भनेको विकासको मेरुदण्ड हो । यस जिल्लामा अहिलेपनि करिब १५ वटा गा.वि.स.हरु यातायातको भरपर्दो पहुँचभन्दा टाढा रहेका छन् । राप्तीपारि बघौडाक्षेत्रका नौ वटा गा.वि.स.हरु र नेपालगन्ज छेउछाउका ६ वटा गा.वि.स.हरुलाई भरपर्दो सडक सञ्जालले जोडेपछि सबै ४६ गा.वि.स.हरु जिल्ला सदरमुकामसँग आवद्ध हुनेछन् । हाल भइरहेका करिब एक सय किलोमिटर ग्रामिण सडकहरुलाई कालोपत्रेस्तरमा र एक सय पच्चीस किलोमिटर विभिन्न सडकहरु ग्राभेलस्तरमा स्तरन्नोति नगरेसम्म जिल्लाको आर्थिक आधारको बलियो मेरुदण्ड तयार हुन सक्दैन। हुलाकी सडकको निर्माणमा भईरहेको ढिलाईले जिल्लामा ठुलो चिन्ता उत्पन्न गरको छ। त्यस्तै नेपालगन्जबाट फत्तेपुर हुँदै अगैया जोड्ने सडकको दुरावस्था समेतले हामीलाई गिज्याइरहेको भान हुन्छ ।

(४) बाढी, डुबान र कटान बाँके जिल्लाको नियति बनेको छ। बर्षमा ३ महिना सबै जाग्ने र बाँकी नौ महिना निदाउने प्रवृति बर्षौदेखि चलिरहेको छ । भारत सरकारको सहयोगमा राप्ती नदीको दुवै किनारातर्फ पक्की तटबन्ध निर्माण गरिने विषय नेपाल भारत कुटनीतिक वार्ता र उच्चस्तरीय राजनीतिक भेटघाटको एजेण्डा हुने गरेको छ। तर यसको सार्थक परिणाम नआउँदा होलिया गा.वि.स.को अस्तित्व नै समाप्त हुने अवस्थामा पुगेको तर्फ राज्य संवेदनशील भएको स्थानीयवासीले अनुभूत गर्न सकेका छैनन् । राप्ती नदी नियन्त्रणमा यसरी नै ढिलाई हुँदै जाने हो भने जिल्लाको ८ वटा गा.वि.स.हरुको अस्तित्व मेटिन सक्छ र जिल्लाको २० प्रतिशत उर्वर भूमि मरुभूमिकरण हुनेछ ।

(५) यस जिल्लाको ५० प्रतिशतभन्दा बढी कृषियोग्य भूमि सिँचाई गर्नसक्ने क्षमता रहेको पश्चिम राप्ती नदीमा निर्माणाधीन सिक्टा सिँचाई योजनाको हालसम्मको कामको गतिबाट सन्तोष लिन त सकिन्छ तर अबका दिनमा निर्माणमा आउने चुनौती सामना गर्ने अवस्थामा आयोजना रहेको पाइदैन । हालसम्म अगैया देखि निर्माण भएका नहर प्राय जगंलीक्षेत्रमा निर्माण भएको र बालापुर र ढकेरी क्षेत्रमा मात्र जग्गाको मुआब्जा वितरण गर्दा अहिलेसम्मको निर्माणमा खासै अवरोध देखिएन। तर अब नेपालगन्ज कोहरपुर राजमार्गको पूर्व र पश्चिमक्षेत्रमा निर्माण हुने नहरको लागि जग्गा प्राप्ति गर्न ठुलै महाभारतको सामना गर्नुपर्ने स्थिति छ ।

कोहलपुर गा.वि.स.क्षेत्रका जमिनहरु १५ देखि २० लाख कठ्ठाको दरले घडेरी मूल्यमा खरिदबिक्री हुने गरेकोमा आयोजनाको ३/४ लाख कठ्ठाको निर्धारित मुआब्जा मूल्यमा जमिन पाउन सम्भव देखिँदैन । यस विषयलाई गम्भिरतापूर्वक लिएर अहिले नै नहरको पुरै रेखाङ्कन गरी आवश्यक जमिन एकै पल्ट अधिग्रहण गर्न नसकेमा सिक्टाको सपना केहि वर्ष धकेलिन सक्छ ।

(६) नेपालगन्जमा पनि नेपालगन्ज विश्वविद्यालयको स्थापनाको लागि विगतमा आन्दोलन, जुलुस, धर्ना, भन्सार ठप्प जस्ता कार्यक्रमहरुमा सबै दलहरुको ऐक्यवद्धता रहेको पाइयो । विश्वविद्यालय स्थापना हुनु स्वागतयोग्य नै हो तर कपालविनाको टुप्पी भने झैं विश्वविद्यालय स्थापनाले मात्र समग्र शैक्षिक अवस्थामा सुधार ल्याउन नसक्ने रहेछ भन्ने तथ्य त मध्य-पश्चिम विश्वविद्यालय सुर्खेतमा लामो समयसम्म भएको तालाबन्दी र गतिरोधले यो कुराको पुष्टि गरेको छ ।

यस्ता लथालिङ्ग संस्थाको स्थापना गर्न बल गर्नुभन्दा के गर्दा जिल्लाको समग्र शैक्षिक विकासमा टेवा पुग्दछ त्यसमा लाग्नु पर्दछ । खजुरामा नेपालकै ठुलो कृषि अनुसन्धान केन्द्र छ । सो भौतिक संरचनाहरुको उपयोग गरेर मध्य-पश्चिम र सुदुर-पश्चिमलाई समेट्ने गरी कृषि क्याम्पस र विश्वविद्यालय स्थापना गर्न सकिएमा सो क्षेत्रको मौसम, हावापानी, वनस्पति सुहाउँदो कृषिको विकासमा योगदान पुग्न जानेछ । *(दुइ वर्षसम्म बाँकेको स्थानीय विकास अधिकारीका रुपमा रहेका डोटेल हाल मन्त्रालयमा कार्यरत छन् ।)*




# फेरिँदै नेपालगन्ज

ऐतिहासिक सहर नेपालगन्ज पर्यापर्यटकीय मध्यपश्चिमको प्रवेशद्वार हो । यसको इतिहास जतिनै सुन्दर र आश्चर्यलाग्दो छ त्यतिनै उपेक्षित पपनि छ । तर, अबको ५ वर्षमा नेपालगन्ज काँचुली फेर्दैछ ।

एकै पटक नेपालगन्जमा एशियाली विकास बैंक (एडिबी)को सहयोगमा नेपालगन्ज(कोहलपुर सडकखण्डलाई फोरलेन बनाउने निर्माण कार्य औपचारिक रुपमा सुरु भएको छ । भने, नेपालगन्ज नगरपालिकासमेतको लगानीमा यहाँको मुख्य समस्या ढल निकासका लागि एडिबीकै सहयोगमा काम भइरहेको छ। सडक बिस्तार परियोजनाले दुई छुट्टाछुट्टै ठेकेदार कम्पनी चयन गरी सडक निर्माण प्रक्रिया अगाडी बढाएको हो ।

सडक डिभिजन कार्यालयले एडिबीको सडक बिस्तार परियोजनालाई सुर्खेतरोड बिस्तारका लागि हस्तान्तरण गरे लगत्तै कालिका कन्स्ट्रक्सन प्रा.लि. र एमआर(इन्डिया पप्पु जेभीले निर्माण प्रक्रिया सुरु गरेका हुन् । दुवै निर्माण कम्पनीले सडक बिस्तारका लागि आवश्यक फिण्ड वर्क गरिरहेका छन् । परियोजनाले पप्पु जेभीलाई भारतीय नाका जमुनाह देखि नेपालगन्ज बजार हूदै राझा सम्मको १० किलोमिटर र कालिका कन्स्ट्रक्सनलाई राझादेखि कोहलपुर चौराहा सम्मको ११.७०० किलोमिटर सडक निर्माणको सम्पूर्ण निर्माण कार्य जिम्मा लगाएको छ । कालिका कन्स्ट्रक्सनका प्रोजेक्ट डाइरेक्टर युवराज क्षेत्रीले निर्धारित समयभन्दा छिटै काम सकेर जनतालाई सुविधा उपयोगको अवसर सिर्जना गर्न तल्लिन भएर लागेको' बताए । उनका अनुसार, आफ्नो सम्पूर्ण यूनिट सिक्टा सिंचाइ परियोजना निर्माणका क्रममा बाँकेमै रहेकाले निर्धारित दुई बर्ष पहिले नै निर्माण कार्य सक्ने लक्ष्य राखेको छ। फोर लेन सडक, ग्रिन वेल्ट, फुटपाथ लगायतका संरचना निर्माणका लागि कालिकाले ४७ करोडमा जिम्मा पाएको छ ।

पप्पु जेभीले नगर भित्र विल्ड अप एरियामा फोर लेन र नन विल्ड अप एरियामा सिक्स लेन सडक निर्माण गर्ने म्यानेजर योञ्जनले जानकारी दिए । दुई बर्षभित्र सक्नुपर्ने सडक बिस्तार कार्यका लागि पप्पु जेभीले ४८ करोड बढी लागतमा ठेक्का पाएको छ ।

परियोजना अन्तर्गत २३ देखि ३२ मिटर सम्मको सडक चौडाई क्षेत्रफलमा सम्पूर्ण निर्माण कार्य पूरा गर्ने जिम्मा लिएको निर्माण कम्पनीले निर्बाध काम अगाडी बढ्न पाएमा दुई बर्षभित्रै सडक हस्तान्तरण योजना बनाएको पप्पु जेभीका कन्ट्रायाक्ट म्यानेजर गोपाल बहादुर योञ्जनले जानकारी दिए । यो सडक निर्माण पछि नेपालगन्ज शोभायमान सहरका रुपमा स्थापित हुनेछ,-म्यानेजर योञ्जनले धारणा व्यक्त गरे । सडक डिभिजन कार्यालय नेपालगन्जका अनुसार, सडकका दुवै तर्फ ४० मिटर क्षेत्रफल भित्र एडिबीले सडक बिस्तार कार्य गर्नेछ । '४० मिटरले पुगेन भने आवश्यक क्षेत्रफल हामी व्यवस्था गरिदिन्छौं'-सडक कार्यालय भनेको छ । सडक कार्यालयले तद्अनुरुप र ेखाङ्कन गरेपछि धमाधम स्वस्फूर्त घरहरु पनि भत्काईंदै छन् ।

○संवाददाता




# मुहार फेर्दै राप्तीपारी



**■ विनय दीक्षित**

बाँकेको छुट्टै बाँके, अर्थात् राप्ती पारि । दक्षिणपूर्वी बाँकेमा नेपाली रुपिया देख्न दुर्लभ छ, अहिले पनि । सरकारी सुविधाको अभाव मानिएको बाँकेको राप्तीपारी क्षेत्रमा रहेका गाबिसहरुमा पछिल्लो केही वर्ष यता भने विस्तारै विकासले गति लिएको छ । गाउँमा जहाँ एक दशक अघि टुकी बालेर काम चल्थ्यो त्यहाँ अहिले सोलार र बिजुली बत्तीको प्रयोग बढेको छ ।

दशक अघिसम्म असुविधाको मारमा मिचिएको राप्तीपारी क्षेत्रमा अहिले हुलाकी राजमार्गका कारण सम्भावना देख्नेको पनि कमी छैन, सडक निर्माण भई सुचारु हुँदा रोजगार व्यवसायको सम्भावनामा निकै सुधार हुने स्थानीयवासीको बुझाई छ ।

राजमार्ग निर्माणसंगै विद्युतीकरणको कार्यपनि तीव्र गतिले सुधार हुन थालेपछि स्थानीयवासीहरु आगामी दुई वर्ष पछिको गर्ने कार्यको योजना अहिले नै निर्माण गर्न थालेका छन् । कतिपय स्थानमा उद्योग, पेट्रोलपम्प, डीलर, एजेन्सी लगायतका व्यवसायिक प्रतिष्ठान धमाधम दर्ता भएका छन् ।

ग्रामीण क्षेत्रमा पछिल्लो केही वर्ष यता जग्गा कारोबार समेत बढ्दै गएको गाबिस पदाधिकारीहरु बताउँछन् । हुलाकी राजमार्ग निर्माण हुने सडकको छेउमा जग्गा किन्न निकै अप्ठ्यारो भएको मटेहिया गाबिस सचिव मो.इस्माइल खाँले बताए । उनले बैदेशिक रोजगारीमा युवाहरुको आकर्षण बढेपछि जग्गा लगानी बढेको बताए, 'अहिले जो सुकैले पनि जग्गा नै किन्ने होडबाजी चलेको छ' खाँले भने, 'मान्छेसँग पैसाको खाँचो छैन ।'

यस क्षेत्रमा रहेका ९ वटा गाबिसमध्ये बैजापुर, विनौना र फत्तेपुरमा विकासका केही चरणहरु समेत पूरा भै सकेका छन् । बाढीका पीडाबीच पनि अधिकाँश क्षेत्रमा विद्युत प्रवाह भएको छ, भने गाउँ भित्र सम्म समेत ग्राभेल सडक पुगेको छ ।

दक्षिणपूर्वी गाविसहरु गंगापुर, मटेहिया, नरैनापुर, कालाफाँटा, लक्ष्मणपुर र कटकुईंया गाबिसका अधिकाँश गाउँमा पक्की भवन बनाउने होड चलेको छ । गत वर्ष आगलागीका कारण सय बढी घर जलेको मटेहिया वडा नं.८ जमुनहा गाउँका केही पीडितले पक्की घर बनाएका छन् । रोजगारको आकर्षक गन्तव्य मानिएका भारत र खाडी मुलुकमा युवाहरुको बाक्लो उपस्थितिले राप्तीपारी क्षेत्रमा विकासका सम्भावना वृद्धि भएको कालाफाँटाका युवा हरिवंश मौर्यले बताए ।

गंगापुर देखि कटकुईंया सम्म ६ वटा गाबिसमा हाल विजुली नपुगेकोले स्थानीय स्तरमा विद्युत चाँडै जडान गर्न दबाव समेत बनाइएको नरैनापुरका पूर्व गाबिस अध्यक्ष अजय कुमार श्रीवास्तवले जानकारी दिए । 'विद्युत विस्तार भए कल कारखानाको स्थापना गर्न सजिलो हुन्थ्यो' श्रीवास्तवले भने । विद्युत जडान नभएपनि यस क्षेत्रका गाउँहरु राती शहर जस्तै देखिन्छन्, घर घरमा सोलार जडान छ, कतिपयले ल्यापटपमा नेट चलाउँदै बसेका हुन्छन् भने कतिपय आधुनिक कृषि पेशा समेत अंगालेका छन् । कटकुईंयास्थित बनियागाउँ, सुईया, मझरेटी, विरता लगायतका गाउँमा तीव्र गतिले पक्की संरचनाको निर्माण भैरहेको गाबिस सचिव अशोक कुमार श्रीवास्तवले बताए । पछिल्लो ५ वर्ष देखि भौतिक संरचना बनाउने काम अविश्वानीय रुपले अघि बढेको छ, सचिव श्रीवास्तवले भने । उनले बैदेशिक रोजगारमा जाने क्रम बढेपछि जग्गा र भवन सम्बन्धी काम एकाएक बढेको बताए ।

कृषि पेशामा पनि आधुनिकीकरण बढेको गंगापुर गाबिस मुखिया जीवनलाल यादवले जानकारी दिए । उनले पछिल्लो समयमा कृषकहरुको आकर्षण मेन्था खेती तर्फ बाढेको बताउँदै यस वर्ष बाढीका कारण करोडौको क्षति भएको जानकारी दिए । उनले गंगापुर र होलिया गाबिस क्षेत्रमा २ सय विगहा जग्गामा लगाइएको मेन्था बाढीका कारण नष्ट भएको बताए । कालाफाँटा गाबिसको रोशनपुर्वा, बालापुर, गेगली, रेतहीया लगायतका गाउँबाट विदेशिएकाहरुको तथ्याँक देखाउँदै सचिव मोहर्रम अली मुकेरीले भने कतिपय भारतबाट विदेश गएका कारण उनीहरुको रेकर्ड पाउन गाह्रो भएको बताए ।

विकासका वीच राप्ती नदीको बाढीले होलिया, गंगापुर, फत्तेपुर र मटेहिया गाबिस प्रभावित हुने गरेको बताइएको छ । पछिल्लो समयमा राप्ती नदीको धार परिवर्तन भएका कारण दर्जनौं गाउँहरु बाढीको उच्च जोखिममा पर्ने गरेको प्रकोप व्यवस्थापन सम्बन्धी काम गर्दै आएका विनय राज त्रिपाठीले बताए । 'होलियाको ९ वटै वडामा खाना पकाउन ठाउँ हुँदैन' त्रिपाठीले भने । उनले यस वर्षको बाढीका कारण जनजीवन अस्तव्यस्त भएको भन्दै निकासका लागि स्थानान्तरण नै एकमात्र उपाय रहेको बताए ।

*(दिक्षित दैनिक नेपालगन्जका संवाददाता हुन्)*

# कृषि क्रान्तिको गोरेटो

'कृषि प्रधान देश नारामा मात्र सीमित भएको छ, हामी कृषि परनिर्भर देशका रुपमा रुपान्तरण हुँदै जाने खतरा छ'- डेढ दशक देखि मध्यपश्चिमांचल केन्द्रित खाद्य उद्योगमा सक्रिय प्रदिप कुमार छाजेडले सम्यक यात्रामा कुराको उठान गरे ।

कृषि उब्जनीका लागि अति उर्वर मानिएको बाँके र बर्दियाका किसानलाई लक्षित गरी के. एल. दुगड समूहले बाँकेको पार्वतीपुरमा प्रतिभा राइस मिल, विकास फ्लोर, ज्ञान फुड प्रोडक्ट, सौरभ आयल मिल लगायतका प्लान्ट लगाएको दुई दशक पुग्दैछ । ति सबै प्लान्ट नजिकबाट हेर्दै आएका छाजेड के.एल. दुगड समूहका प्रबन्धक हुन् ।

खासगरी के.एल. दुगड ग्रुपले गत बर्षदेखि सुरु गरेको 'ज्ञान एग्री' को सेरोफेरोमा रहेर कुरा गर्न सुरु गरिंदा छाजेडले धेरै समस्या मात्र औंल्याएनन् त्यो भन्दा धेरै सम्भावनाका कुरा पनि गरे । ग्लोबल आइएमइ बैंकसँगको सहकार्यमा किसानका घर दैलोमै गएर ५० हजार देखि लाखौं रुपैयाँ लगानी गर्ने योजनाको 'ज्ञान एग्री'ले एक बर्षमा लगभग ७५ किसानका लागि डेढ करोड लगानी गरिसकेको छ । छाजेडका अनुसार, बढी पैसा मेन्था खेतीमा लगानी गरिएको छ ।

के.एल.दुगड ग्रुपले आफ्ना उद्योगका लागि स्वदेशमा कच्चा पदार्थको अभाव बढ्न नदिन अघि सारेको 'ज्ञान एग्री' परियोजना वास्तवमा कृषि क्रान्तिको एउटा गोरेटो हो । छाजेड कै शब्दमा यसले आम किसानलाई जीवन स्तर उकास्न मद्दत त पुर्‍याउँछ नै सयकडा तीन रुपैयाँ मासिक ब्याजदरमा ऋण लिएर खेती किसानी गर्दै आएका यहाँका गरिब किसानहरुका लागि बार्षिक १४ प्रतिशत कृषि कर्जामा सजिलैसँग कृषि उत्पादनका लागि सहकार्य गर्न सकिन्छ ।

'बार्षिक ३६ प्रतिशत सम्म ऋण लिएर किसानले बिउ बिजन मल, श्रम खरिद गरेको पाइयो', अध्ययन बारे जानकारी दिँदै छाजेडले भने, 'त्यो कुरालाई मध्यनजर गरेर हाम्रो समुहले यो परियोजना अघि सारेका हौं ।' छाजेडले ग्लोबल आइएमइलाई ब्याज दर कम गर्न अनुरोध गरिएको सुनाउँदै भने, 'सरकार किसानलाई सहुलियत दिन चाहन्छ भने कृषि क्षेत्रका लागि अनुदान दिने नीति बनाउनु पर्छ ।' उनले खेतीका लागि ५ प्रतिशत ब्याजदर निर्धारण गरी राष्ट्र बैंकले त्यसको अनुगमन गर्नुपर्ने सुझाव दिन्छन् ।

भारतमा उब्जनी वृद्धिका लागि सरकारले ठूलो लगानी गरेको छ । उनले कुराकानीका क्रममा भने, 'त्यसले उत्पादकत्व मात्र बढाएको छैन, भारतलाई कृषि उब्जनीका लागि आत्मनिर्भर पनि बनाइरहेको छ ।' आफुहरुको फरक सोंचलाई सरकारले अनुसरण गर्न सक्ने औंल्याउँदै छाजेड भन्छन्, 'कृषि प्रधान देश अब आयात प्रधान भइसक्यो, यस्तै अवस्था रह्यो भने उत्पादकत्व सकिएर जान्छ, हामी पूर्ण रुपमा परनिर्भर हुन्छौं । के. एल. दुगड समूहले न्यूनतम ५० हजार देखि अधिकतम जति पनि लगानी गर्न सक्ने परियोजना हो,'ज्ञान एग्री' । खासगरी बाँके, बर्दियामा नमूनाका रुपमा सुरु गरिएको परियोजना अन्तर्गत ग्लोबल आइएमइ बैंकसँग कृषि कर्जाका लागि दुगड समूहले सहजीकरण गरिरहेको छ । '५० लाख

'भारतमा उब्जनी वृद्धिका लागि सरकारले ठूलो लगानी गरेको छ', उनले कुराकानीका क्रममा भने, 'त्यसले उत्पादकत्व मात्र बढाएको छैन, भारतलाई कृषि उब्जनीका लागि आत्मनिर्भर पनि बनाइरहेको छ ।' आफुहरुको फरक सोंचलाई सरकारले अनुसरण गर्न सक्ने औंल्याउँदै छाजेड भन्छन्, 'कृषिप्रधान देश अब आयात प्रधान भइसक्यो, यस्तै अवस्था रह्यो भने उत्पादकत्व सकिएर जान्छ, हामी पूर्ण रुपमा परनिर्भर हुन्छौं ।'



- प्रदिपकुमार छाजेड

कर्जा दिने धेरै बैंक भेटिन्छन्, तर ५० हजार कर्जा लिन किसानलाई कम्ति समस्या छैन', छाजेडले कृषि विकास कार्यालयको अध्ययनलाई आधार बनाएर उब्जनीका लागि आवश्यक पर्ने बिउ, मल, श्रम र औषधीको मूल्य समेत जोडेर आवश्यक रकम कर्जा उपलब्ध गराउने बताए । त्यसका लागि सचेतना फैलाउन ३ जना प्राविधिक गाउँमा खटाइएको छ । 'यसबाट कम्पनीले निकै नोक्सानी बेहोरिरहेको छ', छाजेडले दीर्घकालीन सोंचका आधारमा परियोजना सुरु गरिएको जानकारी दिँदै भने, 'अहिले अपेक्षित लगानी हुन सकेको छैन ।' किसानले कर्जा लिन सामान्य प्रक्रिया र धितो राखे पुग्ने व्यवस्था मिलाइएको उनले बताए ।

परियोजनाले कृषि उब्जनी वृद्धिका लागि ५० करोडसम्म लगानी गर्न तयार रहेको जनाएको छ । 'हामीसँग पैसाको खाँचो छैन, छाजेडले किसानसँग योजना माग गर्दै भने, 'उत्पादन अनुसारको सम्पूर्ण खरिद पनि हामी नै गरिदिन्छौं ।' परियोजनाले खाद्यान्न बाहेक मेन्था खेतीका लागि लगानी गरेको छ । बजार मूल्यमै आफुहरुले किसानको उब्जनी खरिद गर्ने व्यवस्था गरिएको उक्त परियोजनामा किसानको उब्जनी बिक्री गर्ने स्वतन्त्रता सुरक्षित छ । 'किसानले हामी कहाँ भन्दा बढी भाउ बजारमा पाए भने बेच्छ सक्छन्, मात्रै हामीलाई जानकारी दिनु पर्छ ताकि बैंकको कर्जा भुक्तानी बारे हामी निर्धक्क बन्न सकौं', छाजेडले प्रष्टयाउँदै भने ।

***(सम्यक यात्रामा कुराकानी)***

# गौरवका दुई बर्ष

**समाचारदाता**

दैनिक नेपालगन्ज पुनर्प्रकाशनको दुई बर्ष पूरा भएको छ। पत्रिका सुरु गरेको दुई बर्ष भयो जस्तो लाग्दैन, तर यसका अङ्कहरुले प्रमाणित गरिसकेका छन्। यो लेख प्रकाशित भएको अङ्क तपाई सामु पुग्दा एक बर्ष थपिएको हुने छ। प्रकाशक र सम्पादक टोलीले दैनिक नेपालगन्जको बितेको बर्षको मुल्याङ्कन गर्दा आफूलाई निक्कै भाग्यमानी सम्झन्छ, तपाईको साथ र सहयोगका कारण यति ठूलो जिम्मेवारी सहजताका साथ सम्पन्न गर्न सकेकोमा। तर, यो सफलताको भागिदार हामी एक्लै छैनौं। सबैभन्दा ठूलो अधिकार त तपाईंको छ, जसले दैनिक नेपालगन्ज खोजी खोजी पढ्नु भयो, विज्ञापन दिनुभयो। पत्रिका ढिलो पुगेमा चासो दिएर फोन गर्ने वा ब्लगमा अपलोड गर्न ढिलो भएमा फेसबुक वा इमेलमा पत्रिकाबारेको तपाईको सोधीखोजी हामी कहिल्यै बिर्सन्नौं।

हामीले आफ्नो पत्रकारिताको धर्म कत्तिको इमानदारितापूर्वक निर्वाह गर्‍यौं भन्ने मुल्याङ्कन पाठकहरुले अवश्य नै गर्नु भएको होला। आफुले गरेको कामले समाजमा राम्रो मात्र प्रभाव पारिरहेको छ भनेर गजक्क पर्ने पक्षमा हामी छैनौं। हामीले दुई बर्ष केही गर्‍यौं, त्यसको पुनरावलोकन र मुल्याङ्कन होस् र सुधार गर्दै थप राम्रो बनाउंन सकियोस् भन्ने हाम्रो चाहना हो। तपाइँको साथ, सहयोग र उत्प्रेरणालेनै हामी समाचारमूलक बेभसाइट सञ्चालनको सोंचलाई सार्थक बनाउदै छौं।

मोफसलमा एकै पत्रकारले सबै विधागत रिपोर्टिङ गर्नु पर्ने अवस्था एकातिर छ भने अर्कोतिर थोरै पानाको पत्रिकामा सबै विधागत समाचार मिलाएर छाप्नुपर्ने बाध्यता पनि। यस्तो अवस्थामा समेटिनु पर्ने बिषय छुटिरहेका र पाठकलाई आवश्यक नै महसुस नभएका सामाग्रीहरु छापिइरहेका पनि हुन सक्छन्। हाम्रा आदरणीय पाठकहरुले पक्कै यसबारे हामीलाइ घच्घच्याउनु हुनेछ समेट्नु पर्ने तर छुटिरहेका केही बिषयहरु हामीलाई पनि महसुस भएका छन्। हामी शहरका समाचार भरेर पत्रिका लिएर गाउँ गाउँ पुगेका छौं। बयस्कका समाचार लिएर विद्यालय पुगेका छौं। नेताका भाषणले भरिएको पत्रिका लिएर वित्तिय संस्थाहरुमा गएका छौं। जो पाठक लक्षित हुनु पर्थ्यो, ति पाठकहरुका समाचार छुटिरहेका छन्। अबका




बर्ष हामी यी लक्षित बर्गका लागि समेत उपयुक्त समाचारहरु पस्किनेछौं। यो हाम्रो प्रतिवद्धता हो। धेरै हदसम्म विगतका प्रतिबद्धता कार्यान्वयनप्रति सन्तुष्ट पार्ने प्रयासमा अहोरात्र खटिरहेका छौं।

गुणस्तरीय पत्रिका हरेक बिहान पाठकसम्म पुर्‍याउनु कम चुनौतीपूर्ण छैन। त्यो चुनौती सामना गर्न हाम्रो सम्पादकीय र व्यवस्थापकीय टोली सधैं तयार रह्यो, यो अर्को गौरवको कुरा हो। बर्षभरि उत्कृष्ट बिचारहरु लेखेर बिचार पेजलाई थप आकर्षक बनाउन सहयोग गर्ने हाम्रा आदरणीय स्तम्भकारहरु धन्यवादका पात्र हुनुहुन्छ। अधिवक्ताद्वय लोकबहादुर शाह र वसन्त गौतम, जसले पत्रिकामा सुरुदेखिनै निरन्तर समसामयिक बिषयमा गहकिला र पेचिला लेखहरु लेखिरहनु भएको छ, यो सफलताको भागिदार उहाँहरु हुनुहुन्छ। युवा लेखकहरु किरण ढकाल, रमेश सिटौला, नमस्कार शाह, पूर्ण ढकाल, भिम रावतले पत्रिका मार्फत उठान गरेका हरेक सवालले एक किसिमको तरङ्ग पैदा गर्ने गरेका छन्। उहाँहरुलाई निरन्तर पाठकसँग जोड्ने हाम्रो प्रयास रहनेछ।

साहित्यमा समय समयमा कलम चलाउने हरिप्रसाद तिमिल्सेना, डा. गोपालप्रसाद शर्मा अधिकारी, भूपेन्द्रप्रकाश शर्मा, गणेश जिसी र अमृत ढकाल, राजन रुपाखेती, रामबहादुर श्रेष्ठ समय सापेक्ष आध्यात्मिक लेखहरु लेख्ने सुरेन्द्र कार्की र पुस्कल नेपाल, वृन्दा पोखेल, विविध विषयमा कलम चलाउँने पदम पाण्डे, भीमबहादुर सिंह, सन्तोष पौडेल, भोजराज सबैको योगदान अमुल्य छ। वातावरणमा चिन्ता गर्ने दिवाकर शर्मा लम्साल, दैनिक नेपालगन्जमा समाचार र बिचारहरु लेखिरहने नेपालगन्जका युवा पत्रकारहरु भीष्म लोध, लक्ष्मी विसी, शोभा केसी, सुनिल रेग्मी हुन् या काठमाडौं बसेर पनि दैनिक नेपालगन्जमा नियमित लेख लेख्ने पत्रकारहरु गणेश पाण्डे, लक्की चौधरी, रामकुमार एलन, विष्णु रिजाल लगायत अन्य लेखकहरुलाई समेत हामी धन्यवाद दिन्छौं।

नयाँ र फरक ढंगले लेखिएको समाचार वा बिचार भए दैनिक नेपालगन्ज सम्झने अन्य पत्रकार साथीहरु पनि छन्। उमा मगर, दीपा आले, अछरी पोखरेल, शोभा गुरुङ, श्रृजना आचार्य, हेमलता जिसी, दैनिक नेपालगन्जप्रति पुर्‍याएको योगदानको हामी हृदयदेखि नै कदर गर्छौं र उहाँहरुलाई यतिबेला पुनः धन्यवाद दिन्छौं।

सहकर्मी विनय दिक्षित, जसको समाचार लेखन क्षमता सधैं प्रशंसा योग्य छ। नयाँ सवालहरु पत्ता लगाउने र त्यसलाई समाचारको आकार दिने मामिलामा कृष्ण चौधरी पनि उत्तिकै खरो उत्रिएका छन्। हामीसँग रहँदा विशाल रानामगर, गोविन्द शर्मा, हेमन्त चौधरी, बर्दियाका सहकर्मी भावुक योगी र सन्दीपकुमार बैश्य, नरेन्द्र सिंह, जाजरकोटकी शान्ता स्वर्णकार हुन् वा दाङका सहकर्मी दशरथ घिमिरे, पवन

जायसवालका स्थानीय सवाललाई लेख्ने उनीहरुको शीपको हामी प्रशंसा गर्छौं । पत्रकार सुरेन्द्र काफ्लेको निरन्तर सहयोग अविस्मरणीय छ। यसबाहेक खेलकूदसँग सम्बन्धित समाचार लेखेपछि दैनिक नेपालगन्ज सम्झने नरेन्द्र थापा पनि धन्यवादका पात्र हुन् ।

दैनिक नेपालगन्जको सफलता चाहने र यसको प्रगतिको कामना गर्ने शुभचिन्तकहरु हजारौंको संख्यामा छन् । प्रारम्भमा दैनिक नेपालगन्जको भाषा सुद्धिकरणमा सहयोग पुऱ्याउनु भएका साहित्यकार हरिप्रसाद तिमिल्सेना, पत्रिकालाई माया गरेर आफ्नै हातले लेखेर रचना पठाउनु हुने आदरणीय प्रेमप्रकाश मल्ल, नेपालगन्जका अग्रज पत्रकारहरु पूर्णलाल चुके, निरज गौतम, शिव डोटेल, काठमाडौंबाट खेम भण्डारीलगायतको पत्रिकालाई राम्रो बनाउँन बर्ष भरी नै केही न केही सुझाव प्राप्त भै रह्यो ।

पत्रकार साथीहरु कृष्ण अधिकारी, शरण कर्माचार्य, जनक नेपाल, रुद्र खड्का, जयनारायण शाह, राजेन्द्र नाथ, यदुराज मिश्र, विश्वराज पछल्डङ्ग्या, ठाकुरसिंह थारु, रुद्र सुवेदी, शुक्रऋषि चौंलागाई, तुला अधिकारी, तिलक गाउँलेले गरेको सुझाव पनि अमुल्य छ। यसबाहेक नेपाल पत्रकार महासंघ, बाँकेमा आवद्ध भएका, नभएका, अन्य पत्रपत्रिका, एफएमरेडियोमा आवद्ध तथा बाँकेलाई कार्यक्षेत्र बनाएर पत्रकारिता गर्ने सहकर्मीहरुको गुणलाई पनि बिर्सन सकिँदैन ।

हाम्रा पछिल्ला दुइ बर्ष, विविध सवालमा कलम चलाउने आशिष गुप्ता, आफ्नो समुदायका सवाललाई लेखन मार्फत सार्वजनिक गर्ने गुलाम हुसैन, इरफान खान, सकिल खान, सकिल अहमद कादरी, सलमा साहिन रंगरेज, गुरुमुरत यादव धन्यवादका हिस्सेदार छन् । कोहलपुरबाट स्नेह व्यक्त गर्ने शंकर अशान्त, सागर गैरे, पत्रकार महासंघका केन्द्रिय सदस्यद्वय सूर्यमणि गौतम र प्रभात चलाउनेको साथ र सहयोगलाई पनि यसबेला सम्झनु पर्ने हुन्छ ।

पत्रिका बितरणको व्यवस्था गर्ने रमेश चौधरी, आर्थिक प्रशासन र बजारको काम हेर्ने सुनिता चौधरी, तपाइँ विज्ञापनदातासँग सम्बन्ध स्थापित गर्न क्रियाशील लोकनाथ शर्मा, रातभरी पत्रिका छापेर बिहान बितरकको हातमा सुम्पने नमस्ते प्रिन्टर्सका दुर्गाज्योति भण्डारी र गोविन्द चौधरी सबै धन्यवादका पात्र छन् । सबैलाई सम्झदैं छौं, तर नाम नसमेटिन सक्छ । हेर्दा लाग्छ, सयौं सहयोगी र हजारौं शुभचिन्तकका कारण मात्रै एक दैनिक पत्रिका पाठकमा हातमा पुग्न सम्भव हुँदो रहेछ । रुकुममा सुरेन्द्र केसी, जुम्लामा भिम कसिङगर, दैलेखमा विष्णु शर्मा, जाजरकोटमा बीरबहादुर गिरि, कैलालीमा दीर्घराज उपाध्याय, हेमन्त पौडेललगायतका पत्रकार साथीहरु दैनिक नेपालगन्जका लागि समाचारमात्र होइन हरसम्भव सुभेच्छुक हुनुहुन्छ । दुई बर्षको कार्यकालमा हामीले थोरै गर्‍यौं र धेरै सिक्यौं । सिकाइको क्रम निरन्तर रहने छ । समाचारले प्राथमिकता नपाएकोमा वा लेख अशुद्ध छापिएकोमा गुनासो गर्ने, पत्रिकाको भाषिक सुद्धता कमजोर भएकोमा सुझाव दिने सबैलाई हाम्रो धन्यवाद छ । हामी जत्तिको भाग्यमानी सायदै कोही होला, जसले यति धेरै शुभचिन्तकहरुको साथ र सहयोग पायो । यो सम्झँदा हामीलाई गौरव वोध हुन्छ । दैनिक नेपालगन्जको टिमको तर्फबाट हाम्रो भन्नु यत्ति छ, हामी तपाईका अघि उभिन्छौं, हात जोड्छौ र अहोभावले झुकेर भन्छौं, 'धन्यवाद' ।

दैनिक नेपालगन्ज

वर्ष : १४ अङ्क २५९ पृष्ठ ४ दैनिक नेपालगन्ज (Dainik Nepalgunj) सोमवार १५ जेठ २०६९ (May 28, 2012)

# अन्ततः संविधान नै नबनाई संविधानसभा समाप्त

असहमतिबीच मंसिर ७ गते निर्वाचनको घोषणा, राजनीतिक भविष्य राष्ट्रपतिमा निर्भर

नेपालकै इतिहासमा पहिलोपटक जनानिर्वाचित संविधानसभाको अवधि मुलुकमा नयाँ संविधान घोषणा नगरी जेष्ठ १४, २०६९ को मध्यरात १२ बजेबाट समाप्त भएको छ ।

दैनिक नेपालगन्ज

वर्ष : १४ अङ्क २५५ पृष्ठ ४ दैनिक नेपालगन्ज (Dainik Nepalgunj) बिहीवार ११ जेठ २०६९ (May 24, 2012)

# आगलागीमा बालिकाको मृत्यु ५० घर जले

# जातियताविरुद्धको प्रदर्श

१२ घाइते



दैनिक नेपालगन्ज

वर्ष : १४ अङ्क २५६ पृष्ठ ४ दैनिक नेपालगन्ज (Dainik Nepalgunj) शुक्रबार १२ जेठ २०६९ (May 25, 2012)




संविधानसभाको म्याद अब 03 दिन बाँकी

सभामसखसँग

# निरन्तरको बन्दले दु

बाँकेमा दु

# फेसबुक, ब्लक हुँदै अब वेभसाइटमा

नेपालगन्जको पत्रिकाहरुको कुरा गर्दा अब्बल नाम लिइने पत्रिका हो दैनिक नेपालगन्ज। सम्यक मिडियाले २०६८ भदौ १९ देखि पुर्नप्रकाशन थालेको दैनिक नेपालगन्ज छापा माध्यममा मात्र नभइ ब्लग र फेसबुकमा पनि लोकप्रिय बन्दै गइरहेको छ।



देबेन्द्र राज पौडेल

इन्टरनेटको बढ्दो प्रयोग सँग पाठकहरुलाई समाचारजन्य सामाग्री पस्कनका लागि केही दिनमै पत्रिकाले समाचारमूल वेभसाइट लन्च गर्दैछ। 'जमाना फेरिएको छ अब मानिसहरु बिहान उठेपछि पत्रिका खोज्नु भन्दा इन्टरनेट मार्फत नै समाचार पढ्नेहरुको संख्या बढ्दैछ ' पत्रिकाका प्रधान सम्पादक झलक गैरे भन्छन्, 'पाठकहरुको अभिरुचिलाई ध्यानमा राख्दै समाचारमूलक वेभ साइट केही दिनमै सुरु गर्दैछौं।' उनी नियमित रुपमा वेभसाइट दुरुस्त राख्ने प्रयास गर्ने बताउँछन्।

पुनर्प्रकाशनको दोश्रो बर्षमै दैनिक नेपालगन्ज बिदेशमा बस्ने नेपालीभाषी बिच लोकप्रिय बनेको छ। यो पत्रिका नेपाल बाहेक हालसम्म सन्सारका ६० बढि देशमा हेरिएको छ। पत्रिकाको व्लगमार्फत दैनिक नेपालगन्ज पढ्नेहरुको संख्या नेपाल बाहिर युएईमा उच्च छ। बिशेषत मध्यपश्चिम स्थायी ठेगाना भै विदेशमा बस्ने नेपालीहरु बिच यो पत्रिका लोकप्रिय रहेको पाइएको छ।




## बिदेशमा झनै लोकप्रिय

| Country | Views |
|---|---|
| Nepal | 21,387 |
| United Arab Emirates | 3,391 |
| United States | 2,376 |
| Qatar | 1,781 |
| India | 1,701 |
| Saudi Arabia | 1,334 |
| Netherlands | 429 |
| Malaysia | 256 |
| Australia | 212 |
| Afghanistan | 199 |
| Republic of Korea | 165 |
| Portugal | 151 |
| Switzerland | 148 |
| Japan | 136 |
| Kuwait | 103 |
| United Kingdom | 72 |
| Israel | 71 |

नेपालगन्ज-१३ सुर्खेतरोड स्थायी घर भएका प्रविनकुमार श्रेष्ठ पनि हाल अमेरीकामा छन्। उनी भन्छन्, 'म हरेक दिन दैनिक नेपालगन्ज हेर्छु।' उनी पत्रिकामा छापिएका समाचार प्रति चासो समेत राख्ने गर्छन्। नेपालमा छँदा झण्डै एक दशक नेपालगन्ज नगरपालिका कार्यालयमा समेत काम गरेका प्रविनलाई स्थानीय घटनाहरुबारे सधैं चासो भै रहन्छ।

यसबाहेक दैनिक नेपालगन्जको व्लग हेर्नेहरुको संख्या खाडी मुलुकहरुमा पनि अधिक छ। युएई, कतार, साउदी अरेविया अग्रपङ्क्तीमा छन्। यसपछि भारतको पालो आउँछ। नेपाली भाषी अधिक रहेको सिक्किममा दैनिक नेपालगन्ज लोकप्रिय रहेको पत्रिकाका संस्थापक विधुप्रकाश कायस्थ जानकारी दिन्छन्। जापान र दक्षिण कोरियामा बस्ने नेपाली भाषीहरु विच यो पत्रिका उत्तिकै लोकप्रिय छ। दक्षिण कोरियामा रहेकी रमेश कार्की दैनिक नेपालगन्ज पढेर आनन्द लाग्ने

# केही दिनमै नेपालगन्ज न्यूज डट कममा पलपलका खबर हेर्न सकिनेछ

nepalgunjnews.com

Please setup "Top Menu" using Wordpress Dashboard > Appearance > Menus

दैनिक नेपालगन्ज

ONLINE NEWS PORTAL FOR NEPALGUNJ

गृहपृष्ट हाम्रो बारेमा सम्पर्क मुख्य समाचार विचार साहित्य सूचना/प्रविधि सम्यक संवाद स्वास्थ्य/यौन

BREAKING



गाइजात्राकै अवसरमा बागेश्वरी मन्दिरमा सजिएका बालबालिका

श्रमदानको भरपाई बनाएर रकम ठगी !

30 AUG 2013 POSTED BY NPJ NEWS 0 COMMENT

28 AUG 2013 POSTED BY NPJ NEWS 0 COMMENT

भर्खरै

श्रमदानको भरपाई बनाएर रकम ठगी !

222

सशस्त्र प्रहरीका पूर्व हवल्दार पक्राउ

दैनिक नेपालगन्ज पिडिएफमा

फकीर ह्रिङ्केको बाटो

ARCHIEVES

August 2013 June 2013

CATEGORIES

Breaking News Slider Images

दैनिक नेपालगन्ज पिडिएफमा पत्रपत्रिकाबाट

मुख्य समाचार

विचार साहित्य

www.dailynepalgunj.wordpress.com मा पढ्न सकिन्छ । यस ब्लगमा हरेक दिनको पत्रिका अपलोड हुने गरेको छ । दैनिक नेपालगन्जले आफ्नो वेभसाइट तयार पारिसकेको प्रकाशक झलक गैरेले जानकारी दिए । केही दिनमै हाल परिक्षणमा रहेको वेभसाइट सार्वजनिक गरिने उनले बताए । केही दिनमै वेभ साइट मार्फत थप व्यवस्था गर्दै लगिने प्रकाशक समेत रहेका प्रधानसम्पादक झलक गैरे बताउँछन् । उनी भन्छन्, 'विदेशमा बस्ने नेपालीहरुले देखाएको स्नेहले हामीलाई थप हौसला मिलेको छ ।' दैनिक नेपालगन्जमा फेसबुक पेजबाट पनि पुग्न सकिन्छ । फेसबुकको सर्चमा दैनिक नेपालगन्ज टाइप गरेर यो पेज लाइक गरेमा यो पेजको अपडेट हेर्न सकिन्छ ।

*(लेखक दैनिक नेपालगन्जका ब्लग सब एडिटर हुन् ।)*

बताउँछन् । यस्तै नेपालगन्जबाट अष्ट्रेलिया र जापान पुगेका युवाहरुले दैनिकनेपालगन्ज हेर्ने गरेको बताएका छन् ।

यस पत्रिकामा उपसम्पादक रहेका बिशाल रानामगर हाल युगाण्डामा कार्यरत छन् । उनले आफ्नो लेखमा दैनिक नेपालगन्ज पढेर दिनको सुरुवात हुने उल्लेख गरेका छन् यस्तै हाल अमेरीकामा रहेका अर्का सञ्चारकर्मी बालकृष्ण बस्नेतले पनि दैनिक नेपालगन्ज मार्फत नेपालगन्जको परिवेशसँग अद्यावधिक हुन पाएकोमा खुशी व्यक्त गरेका छन् ।

यसरी बिदेशमा मात्र होइन, दैनिक नेपालगन्ज नेपाल भित्रै पनि अनलाइन मार्फत पढ्नेहरुको संख्या दिनहुँ बढ्दो छ । दैनिक नेपालगन्ज समयमै ब्लगमा अपलोड नभएमा हाल सल्यानमा रहेका नेपालगन्जका सञ्चारकर्मी रुपन ज्ञवालीले किन अहिलेसम्म पत्रिका अपलोड भएन ? भनि सोध्ने गरेका छन् । दैनिक नेपालगन्ज अनलाइनमा

Inbox (293) - dailynepalgunj × Nepalgunj News × Daily Nepalgunj | Phone +97 ×

dailynepalgunj.wordpress.com Press Tab to search

दैनिक नेपालगन्ज

Home About Daily Nepalgunj Articles Current News Entertainment Sports Sundry

Posted on September 1, 2013

2070-05-16

Posted in August 2013 | Leave a comment

**खोई हाम्रा मान्छे ?**

Posted on August 30, 2013

सशस्त्र द्वन्द्वकालमा बेपत्ताका परिवारले शुक्रबार नेपालगन्जमा बृहत प्रदर्शनी गरेका छन् । सय बढी पीडित, अधिकारकर्मी, पत्रकार लगायतको सहभागितामा भएको प्रदर्शनीमा पीडितहरुले आफुहरुलाई राज्यले अहिलेसम्म अ"ध्यारोमा राखेको भन्दै दिउ"सै मैनबत्ती बालेर विरोध जनाए ।

३२औं बेपत्ता विरुद्धको अन्तर्राष्ट्रिय दिवसका क्रममा उनीहरुले आ"खा र मुखमा कालो पट्टी बा"धेर मैनबत्ती जुलुस निकालेका हुन् । स्थानीय विपीचोकबाट सुरु भएको दबाब जुलुस नगरका विभिन्न भाग हु"दै जिल्ला प्रशासन पुगेर प्रमुख जिल्ला अधिकारी मार्फत प्रधानमन्त्रीको कार्यालयमा ज्ञापन पत्र पठाएका छन् । न्यायका लागि द्वन्द्व पीडित समाजको अगुवाइमा भएको दबाब जुलुस पछि समाजकी अध्यक्ष चन्द्रकला उप्रेतिले प्रजिअ जीवन प्रसाद वलीलाई ज्ञापन पत्र बुझाउ"दै तत्काल सत्य निरुपण तथा मेलमिलाप आयोगको गठन गर्न र गठन नहु"दा सम्म

Search

Recent Posts

- 2472
- खोई हाम्रा मान्छे ?
- श्रमदानको भरपाई बनाएर रकम ठगी !
- दलको निर्वाचन केन्द्रित सक्रियता
- 2457

Recent Comments

singh raj verma on Current News

bheri yoowa samaaj U... on About Daily Nepalgunj

nischal rawat on About Daily Nepalgunj

Anurag Tiwari on Current News

# फ्ल्यास ब्याक



निकेश चपाईं

ठ्याक्कै १६ बर्ष पछि आज विधुप्रकाश कायस्थजीको झुसेदारी माथीको मुसुक्क मुस्काएको ओठ अनि त्यसपछि धामी हल्लिएझैं हल्लिएको मोटो शरीरसंगैको हाँसो मेरो आँखा अगाडीको पर्दामा टुप्लुक्क आइ पुग्यो । उसो त म नेपाली पत्रकारीतामा अंग्रेजी शब्दहरु सापटी लिनु हुन्न भन्ने मान्छे तै पनि अचानक थाहै नपाई फ्ल्यास ब्याक टु दैनिक नेपालगन्ज भन्न पुगेछु।१६ वर्ष अघि दैनिक नेपालगन्जको विजारोपण गराउने सहकर्मी मध्येको एक हुन पाउनुको आनन्द दैनिक नेपालगन्जको ब्लग र झलक गैरेजीको फेसबुकमा प्रकाशकीय पढ्न पाउँदा अनुभव गर्न पाइयो । यस ऐतिहासिक कार्यका लागि झलकजीलाई टोकरी भरिको धन्यबाद ।

राजधानीमा समेत पत्रकारिता व्यावसायिक हुन नसकेको त्यस अवस्थामा पन्ध्रवर्ष अघि नेपालगन्जमा दैनिक अखबार चलाउने विधुजीको साहसलाई बल्ल अहिले मेरो मनले सलाम ठोक्यो । त्यतिबेला दैनिक नेपालगन्ज प्रकाशनका लागि विधुजीले पूर्ण योजनासहितको प्रयास अनि झलकजी, टिकेजीलगायतका पत्रकारहरुको सामुहिक हिम्मत जुरायो ।

दैनिक नेपालगन्ज प्रकाशन गर्न नै हिम्मतिलो कार्य भएको अवस्थामा यसलाई निरन्तरता दिनु कम चुनौती थिएन । आर्थिक कोष नै शून्य भएको अवस्थामा दैनिक अखबारलाई निरन्तरता दिने पूर्ण योजना विधुजीको एक पेग द्रब्य सँगै पोखियो । निकेश, गोविन्दजी एक महिनासम्मको छाप्ने खर्च ब्यहोर्न तयार हुनुहुन्छ, कोठा र कम्प्युटर यहीँ छ, झलकजी, टिकेजी लगायतकाले समाचार संकलन गर्छन्, तिमी प्रेसमा जान्छौ छपाउँछौ, वितरणको जिम्मा लिन्छौ, अनि हरेकको पसल पसल, घर घर मा वितरण पनि गर्छौं । अनि एक साता पछि ग्राहक बनाउन सुरु गर्छौं, विज्ञापनहरु जे जति आउँछ त्यसका लागी लागी पर्छौं । सबैले आ आफ्नो ठाउँबाट स्वयम् सेवा गरौं अनि एउटा कम्प्युटर टाइप अनि डिजाइन गर्नेलाई ३/४ हजार तलब दिएर काम सुरु गरौं । एक महिना पछि आम्दानी हुन सुरु हुन्छ, कमसे कम छपाउने खर्चमात्र उठाउन सहियो भने ६ महिना भित्रमा हामी पूर्णतया आत्मनिर्भर भइसक्छौं र यसैबाट तलब पनि खान सक्छौं ।

पहिलो अंक निकाल्ने रात सबै सँगै थियौं । डिजाइन तयार भयो, टाइप भयो, अनि विधुजी र म छपाउन राती एक बजे अभियान प्रेसमा गयौं । दैनिक नेपालगन्जको पहिलो अंक छापियो । विधुजी पहिलो अंक हेरेर मुसुक्क मुस्काउनु भो, मैंले भने केवल उहाँलाई साथ दिएँ । पत्रिका बोकेर गोविन्दजीको घर गयौं, पहिलो अंक भएकोले कुनै तनाव थिएन, पत्रिका बोकेर अँध्यारो विहानीमै म पसलका सटरको चर खोज्दै पत्रिका हुल्दै गएँ, घरको मुलढोकाबाट पत्रिका फ्याल्दै गएँ । योक्रम लगातार एक साता चल्दै गयो ।

अर्कोसातादेखि अब नेपालगन्ज बाहिरको वितरणका लागी पत्रिका बेर्दै डल्ला पार्दै नाम लेख्दै बसपार्कमा गएर टिकापुर, कोहलपुर, कतर्निया, भुरीगाउँका बसहरुका हाल्ने काम थपियो । योजना मुताबिक एक महिना बित्यो, अरु सबै स्वयम्सेवामा रहेकाले समस्या भएन तर कम्प्युटर अपरेटरलाई तलब दिन नसक्दा अचानक विरामीको बहाना बनाउँदै काममा नआएपछि पहिलो पटक पत्रिका नियमित नहुने भयो । राती दश बजेसम्म अर्को टाइप गर्ने मान्छे नभेटिँदा विधुजीले उपाय निकाल्नुभो । विज्ञापन ठूलो ठूलो बनाएर हालौं, सामाजिक संदेशका विज्ञापनहरु हालौ, बाँकी समाचारहरु निकेशले टाइप गरेर सेटिङ गरेर भएपनि निकालौं । म दोसाँधमा परैं, नेपाली टाइप नै नगरेको मान्छे कसरी टाइप गरौंला अनि सेटिङ गरौला । विदुजीले भोली १२ बजे सम्म भए पनि निकाल्नै पर्छ भनेपछि कस्सिएँ म पनि । रातभरी सकिनसकि टाइप गरेर दिउसो एक बजे तयार गरेर, प्रेसमा लगेर छापेर ल्याउँदा साँझको पाँच बज्यो । हामीले जुक्ति निकाल्यौं, आज नबाँड्ने दुबै अंक एकैपटक भोली बाँड्ने । म चाहिँ भोलीको अंकको लागी टाइप गर्न कस्सिएँ ।

दैनिक नेपालगन्ज निरन्तर प्रकाशन भइरहे तापनि आर्थिक रुपमा सबल हुन नसकेको अवस्थामा विदुजी अचानक भारत भ्रमणमा निस्कनुभयो । एक साताका लागी जानुभएका विधुजी उतैबाट काठमाडौं लागेको जानकारी पाएपछि टीकेजीले सम्पादनको जिम्मा सम्हाल्नु भो, मैंले समाचार संकलनको । त्यहिँबाट मेरो पत्रकारीता सुरुभयो । त्यतिबेला मेरो मोटरसाइकलको लाइसेन्स नहुँदा पत्रकार भएकै आडमा ट्रायल नै नदिई लाइसेन्स आइपछि मलाई लाग्यो पत्रकारको त निकै नै पहुँच हुँदो रहेछ। त्यसैकारणले पाँच वर्ष पछि मैंले लाइसेन्स नविकरण नगरी साँच्चिकै ट्रायल दिएर नयाँ लाइसेन्स निकालेको हुँ । करिब तीन वर्ष पछि राजधानीको हिमालय टाइम्स हुँदै राजधानी दैनिकको डेक्स सम्पादक सम्म पुग्नुमा दैनिक नेपालगन्जकै सुरुवाती भूमिका मेरा लागि महत्वपूर्ण रह्यो ।

विधुजी काठमाडौंबाट फर्कन ढिलागरेको अवस्था र यता आर्थिक रुपमा कमजोर भएकैबेला झलकजीहरु अभियान दैनिक अखबारको प्रकाशनमा जुट्नु भो। छोटै समयमा अभियानले गति लिन थाल्यो । हामी दैनिक नेपालगन्जका रुपमा लगातार करिब चार महिना जति बजारमा देखिँदै गयौं । सायद विधुजी पनि थाक्नुभयो या के भो, काठमाडौंबाट फर्कंदा उहाँमा त्यो जोश देखिएन। हामी सबैको सल्लाहमा दैनिक नेपालगन्जले विट मा¥यो ।

आज १६ वर्षपछि त्यही दैनिक नेपालगन्जलाई जीवनदान दिएर पनि प्रकाशनको दुई वर्ष सफलता पूर्वक पूरा गर्नु भएकोमा झलकजी लगायत सबैलाई मुरी मुरी धन्यवाद अनि बधाई । फेरि अंग्रेजी वाक्य सापट लिन मन लाग्यो, *यू आर भेरी थ्याङ्कफुल टु टेक मी इन फ्ल्यास ब्याक टु दैनिक नेपालगन्ज ।*

*(दैनिक नेपालगन्जका पूर्व सहकर्मी चपाईं हाल पोर्चुगलमा छन् । उनीद्वारा गत वर्ष विशेषाङ्कमा प्रकाशित आलेख सामान्य संशोधनसहित पुनःप्रकाशित गरिएकोछ । )*

